जन आस्था
साप्ताहिक
JANA AASTHA National Weekly
www.janaaastha.com
वर्ष २९, अंक २७, २०८० साल भदौ २० गते बुधबार, नेपाल संबत् ११४३, September 6, 2023

# चौधरीद्वारा सोझी मन्त्रीलाई फसाउने चक्कर

सञ्चार तथा सूचना प्रविधिमन्त्री रेखा शर्माले गत साता विवादास्पद व्यापारी विनोद चौधरीको रणनीतिक योजनालाई सहयोग पुग्नेगरी सार्वजनिक मन्तव्य दिनुभएको छ। यसबाट आफूलाई डलर अर्बपति भनाउने तर नाममात्रको कर बुझाउने कांग्रेस सभासद् चौधरी संलग्न सिजी टेलिकमको लाइसेन्स फुकुवा गराउने मनशाय प्रकट हुन्छ। गत जेठमै चौधरी र उनका जेठा छोरा निर्वाण एकैसाथ प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डलाई भेट्न बालुवाटार पुगेका थिए। त्यहीबेला सञ्चारमन्त्री रेखा शर्मालाई पनि त्यहाँ बोलाइएको थियो। यो देखेपछि धेरैको अनुमान थियो, 'यो भेट काकताली मात्रै हो कि सुनियोजित ?'

त्यसबेला चौधरीका बाउछोराले प्रधानमन्त्रीमार्फत् दबाबको राजनीति थालेर मन्त्रीसहित भेटको प्रबन्ध मिलाएका थिए। तर सिजी टेलिकमको विवादास्पद फाइल यसअघि नै अख्तियारको कब्जामा छ। आयोगले सक्कल फाइल मगाएपछि दूरसञ्चार प्राधिकरणले उक्त टेलिकमलाई लाइसेन्स दिने प्रक्रिया अघि बढाएको छैन। फाइल टंगाल पुगेपछि चौधरी र उनका प्रतिनिधिहरू काम अघि बढाउन धेरै पटक प्राधिकरण र मन्त्रालय धाइसकेका छन्। टेलिकमसम्बन्धी विद्यमान नियम र कानुनमा पछिल्लो समय धेरै परिवर्तन भएकाले पनि प्राधिकरण सिजीको प्रयासप्रति सकारात्मक बन्न सक्ने स्थिति छैन। मन्त्रालयबाट सिफारिस भएर क्याबिनेट निर्णय नआएसम्म प्राधिकरणले आफ्नो पक्षमा कलम नचोप्ने सुइँको पाएपछि बाउछोराले सञ्चारमन्त्रीलाई बालुवाटारमा हाजिर गराएको बुझ्न गाह्रो छैन। मन्त्रीको गत साताको भनाईले पनि यसको पुष्ट्याइँ गर्छ। मन्त्रीले 'हामीलाई प्रतिस्पर्धी अर्को पनि दूरसञ्चार कम्पनी चाहियो' भन्नुभएको थियो। यसको अर्थ सिजीको फाइल अघि बढाउन मन्त्रीले प्राधिकरणलाई दबाब दिइसकेको हुनुपर्छ।

अहिले प्राधिकरणले सिजीको फाइल हेर्दा लाइसेन्सको निम्ति उसले झण्डै आधा दर्जन मापदण्ड र प्रक्रिया पूरा नगरेको कैफियत देखिएको अख्तियार श्रोत बताउँछ। यता, बालुवाटारदेखि सञ्चार मन्त्रालयसम्म सेटिङ मिलाएपछि चौधरी समूह 'दूरसञ्चारसम्बन्धी काम गर्छु, लाइसेन्स देऊ' भन्दै प्राधिकरणमा धाउन थालेको छ। हालको अवस्थामा पुरानो प्रविधिमा जान नमिल्ने भएकाले चौधरीले बाटो खुलाइदिन मौखिक आग्रह गरेको बताइन्छ। तर, प्रचलित नियमअनुसार तोकिएको शर्त पूरा गर्नुपर्नेमा प्राधिकरण अडिग छ। चौधरीले यसअघि शर्तअनुसार काम नगरेकाले प्राधिकरण अगुल्टाले हानेको कुकुर बिजुली चम्कँदा तर्सिने मनस्थितिमा पुगेको हो। सिजीले किनेको एसटीएम नेपालमा ज्वाइन्टभेञ्चरको रूपमा आएको अमेरिकी जिल्यान्ट कम्पनीको सहायक हो। तत्कालीन पूर्वाञ्चल क्षेत्रका ५३४ वटा गाविसमा पिसिओ राख्न विशेष ग्रामीण दूरसञ्चार कार्यक्रमअन्तर्गत बाँकी ८ पेजमा

# सत्ताभित्र-बाहिर यस्ता रोटी सेकिँदै

**कांग्रेस सभापति शेरबहादुर देउवा उस्तै परे प्रधानमन्त्री छोड्ने तर एमसिसी सम्झौता अनुमोदन गराएरै छाड्ने अडानमा हुनुहुन्थ्यो। एमसिसीको विपक्षमा हुँदाहुँदै पनि माओवादी अध्यक्ष प्रचण्ड र एकीकृत समाजवादीका अध्यक्ष माधव नेपालको भने प्राथमिकता बन्यो- जसरी पनि गठबन्धन जोगाउने। आफू प्रधानमन्त्री हुँदा एमसिसीको पक्षमा खरो उत्रिनुभएका एमाले अध्यक्ष केपी ओलीले भने देउवा-प्रचण्ड विवादलाई गठबन्धन टुटाउने अस्त्रका रूपमा प्रयोग गर्नुभयो। तर, न एमसिसी रोकियो न गठबन्धन तोडियो। १२ बुँदे व्याख्यात्मक घोषणाको मध्यमार्गी बाटोले सम्भावित राजनीतिक संकट टर्‍यो।**

नेपालको सत्ता राजनीतिमा आन्तरिक घटनाक्रमभन्दा बाह्य शक्ति केन्द्रका चासो बढी प्रभावशाली हुन्छन् भन्ने यौटा जबर्जस्त उदाहरण हो- अमेरिकी सहयोग परियोजना एमसिसी। भनिन्छ, तत्कालीन नेकपाको विभाजनका थुप्रै कारणमध्ये त्यो पनि एउटा थियो। ओलीसहित नेकपाको एउटा टिम हरहालतमा एमसिसी पास गर्ने अडानमा रहँदा प्रचण्ड-माधव खेमा भने हुबहु स्वीकार गर्न नहुनेमा प्रष्ट खुलेको थियो। सरकारको नेतृत्व गरिरहेको पार्टीमै एकमत नहुँदा मात्र ओलीको चाहनाविपरीत त्यतिबेला संसदबाट एमसिसी रोकिएको हो।

१२ बुँदे व्याख्यात्मक घोषणाका नाममा त्यतिबेला गठबन्धन जोगाएर सँगै चुनाव लडेका र अहिलेसम्म सत्ता सहकार्य गरिरहेका कांग्रेस, माओवादीसहितका गठबन्धन दलहरूबीच अहिले पुनः एमसिसीकै कारण किचलो शुरु भएको राजनीतिक वृत्तमा चर्चा हुन थालेको छ। नेपालको सार्वभौम संसदले गरेको व्याख्यात्मक घोषणालाई अमेरिकाले खुलस्त स्वीकार नगरेपछि कार्यान्वयनको चरणमा आइपुग्दा गठबन्धनमा पुरानै विवाद बल्झिएको भनिँदै छ। यद्यपि, एमसिसी कार्यान्वयनमा

## कम्युनिष्टहरूलाई फेरि मिलाउने कसरत

*तत्कालीन नेकपाभित्र अन्तरविरोध उत्कर्षमा पुगेका बेला पार्टी एकताको पक्षमा सक्रिय वाम राजनीतिको एउटा पंक्ति एमाले, माओवादी र एकीकृत समाजवादीबीच एकता गराउन भित्रभित्रै सक्रिय भएको जानकारी प्राप्त भएको छ। त्यसबेला पार्टी एकता जोगाउन शीर्ष नेतालाई भेटेरै विभिन्न विकल्प सुझाएका उनीहरूले त्यसैमा केन्द्रित रहेर छलफल शुरु गर्न लागेका हुन्। जनाइएअनुसार तीन वटै पार्टीका एकता पक्षधर दोस्रो तथा तेस्रो तहका नेताहरूलाई भेटेर आफ्ना कुरा सुनाउने उनीहरूको तयारी छ।*

*केपी ओलीले संसद विघटन गर्नुअघि पार्टी एकता कायम राख्न खटिएकामध्ये एक नेताले बताएअनुसार त्यसबेला ओली, प्रचण्ड र माधवसहित सचिवालयका नेताहरूलाई तीन वटा विकल्प दिइएको थियो। सचिवालयका ९ जना नेताले पार्टीको अभिभावकीय भूमिकामा बसेर नयाँ पुस्तालाई नेतृत्व हस्तान्तरण गरे एकता टिकाउन सकिने पहिलो प्रस्ताव राखिएको थियो। पार्टीमा सक्रिय राजनीति नगर्ने तर वाम राजनीतिप्रति आस्था राख्ने त्यो टोलीले त्यसको जिम्मा आफूहरूले लिने विश्वाससमेत दिलाएको थियो। त्यसका लागि ६५ वर्षमुनिका सय जना युवा नेतालाई भेला गरेर पार्टीदेखि राजकीय जिम्मेवारी तोक्न सुझाइएको थियो। त्यसले पार्टीमा नयाँ उत्साह जगाउने र नेतृत्व हस्तान्तरणको नयाँ विधि स्थापित हुने तर्क गरिएको थियो। राजनीतिमा* बाँकी ८ पेजमा

गैसक्यो तर प्रहरी अधिकारीहरूको बेला नपुग्दै सरुवाका बाबजुद भुटानी शरणार्थी काण्डको थप अनुसन्धान र आरजूलाई बचाउने नाममा सरकार ढल्नेसम्मका अनुमान हुन थालेका छन्।

प्रचण्ड नेतृत्वको सरकार जुन पृष्ठभूमिमा गठन भएको थियो, यसै पनि यसको निरन्तरतामा प्रश्न उठिरहेकै छ। तत्कालीन पाँचदलीय गठबन्धनकै नेतृत्वमा सरकार गठन गर्ने स्वभाविक बाटो छोडेर एमालेको समर्थनमा प्रचण्ड प्रधानमन्त्री बन्ने अवस्था सृजना हुनुमा बाह्य शक्ति केन्द्रको चासो पनि मिसिएको थियो। अन्ततः गठबन्धन पुरानै बाटोमा त फर्कियो तर पश्चिमा शक्तिसामु नतमस्तक हुने कांग्रेसभित्रको एउटा खेमाले एमसिसीको आडमा भित्रभित्रै सत्ता समीकरण फेर्ने प्रयास थालेपछि प्रचण्ड सरकार अप्ठेरोमा परेको भनिँदैछ। त्यो पनि प्रधानमन्त्रीको चीन भ्रमणको पूर्वसन्ध्यामा।

त्यसो त, नक्कली भुटानी शरणार्थी प्रकरणमा आफ्ना नेतामाथि पूर्वाग्रह राखेको भन्दै कांग्रेसका नेताहरू सरकारसँग सन्तुष्ट छैनन्। एकजना सांसदले त संसदबाटै प्रधानमन्त्री र गृहमन्त्रीलाई आतंककारीको संज्ञासमेत दिएका थिए। शेरबहादुर देउवाले सर्वदलीय बैठकमै गृहमन्त्रीलाई झपारेको चर्चा पनि छ। गृहमन्त्रीको चाहनाबिपरीत शरणार्थी प्रकरणको अनुसन्धान गरिरहेका एआइजी र एसएसपीहरूको सरुवा त्यसै भएको होइन। तर, त्यसैलाई कारण देखाएर सरकार ढाल्दा आफैँलाई प्रत्युत्पादक हुने खतरा देखेको कांग्रेस उपयुक्त मौकाको खोजीमा रहेको प्रष्टै बुझिन्छ। स्वयं प्रधानमन्त्री प्रचण्डले पनि बेला-बेला त्यस्तो संकेत बाँकी ८ पेजमा

# गाँजाको गुनासो गर्दा एमालेबाट बर्खास्त

उतिबेला राधाकृष्ण मैनालीहरू बाटैमा थाकेर लम्पसार भए, यतिबेला ईश्वर पोखरेलहरू जनकपुरमा जहाज ओर्लिन नपाएर काठमाडौं फिर्ता !

२०४६ सालको भदौ ९ देखि १४ गतेसम्म सिराहाको विष्णुपुरकट्टीस्थित सर्रे अम्बासमा चौथो महाधिवेशन सम्पन्न भएकै ठाउँ गत साता एमालेको सचिवालय बैठक राखिँदा यस्तो प्रसंग निस्किएको हो। अध्यक्ष केपी ओलीले सुनाउनुभएअनुसार, ०४६ मा काठमाडौं कार्यक्षेत्र भएका नेता राधाकृष्ण मैनाली थकानका कारण उक्त गाउँ पुग्न नसकेर बाटैमा लमतन्न परी सुत्नुभयो। 'पुलिसले लगोस् कि यमराजले लगोस्, म त हिँड्न सक्दिनँ' भन्दै उहाँ बाटैमा ढल्नुभएको कुरा बैठक स्थलमा ओली सुनाउँदै हुनुहुन्थ्यो। त्यसबेला राधाकृष्णसँगै कृष्णगोपाल श्रेष्ठ पनि थिए। पछि स्वयंसेवकहरूले उठाएर महाधिवेशनस्थलसम्म पुर्‍याएको ओलीको विवरण सुनेर अरु नेता गलल हाँसे। संयोग कस्तो भयो भने, यसचोटि काठमाडौंबाट उडेको बुद्ध एयरबाट उक्त बैठकमा भाग लिन गएका उपाध्यक्ष ईश्वर पोखरेलहरू सवार जहाज जनकपुरमा अवतरण हुन सकेन। काठमाडौं फिर्ता भई फेरि अर्को उडानबाट जानुपरेको थियो। शायद यसैलाई भन्दछन्, समय र प्रविधिको खेल। उतिबेला सबै नेता गाडी फेर्दै लाहानमा उत्रिई पैदल नै कार्यक्रमस्थलसम्म पुगे। यतिबेला जहाज नचढी जाने नेता पाइएनन्। त्यहीँसम्म जहाज नपुग्ने कारण कोही बाँकी ८ पेजमा

# सन्तान टिकाउनै कसरी सकिएला !

छोराछोरी देशमा टिक्नै गाह्रो, टिकिहाले पनि काम दिलाउन झन् साह्रो ! सन्तानलाई डाक्टर, पाइलट र इञ्जिनियरजस्ता महंगा शिक्षा दिलाएका अभिभावककै पीडा यस्तो छ।

अहिले देशमा होस् या विदेशमा चिकित्सा शिक्षा हासिल गरी फर्किएका थुप्रै डाक्टर काम नपाएर हैरान छन्। मेडिकल काउन्सिलको परीक्षा पास गरेपछि निश्चित समय कुनै अस्पतालमा इन्टर्न गर्नुपर्ने व्यवस्था छ। निजी क्षेत्रका अस्पतालले हत्तपत्त इन्टर्नका डाक्टर छिराउनै मान्दैनन्। सरकारीको त झन् कुरै भएन। यस्तो हुँदा थुप्रै डाक्टर बेरोजगार छन्। देशमा बिरामीको संख्या बढी छ। स्वास्थ्य मन्त्रालयको दरबन्दी हेर्दा स्वास्थ्य चौकी, अस्पतालहरू मनग्यै देखिन्छ। तर, डाक्टरको अभाव छ। किनभने, सरकारी जागिरका लागि डाक्टरको दरबन्दी चाहिनेभन्दा निकै कम स्वीकृत भएको छ। निजी क्षेत्रले दिने विशेषज्ञ सेवाका लागि नयाँ डाक्टर काम लाग्ने भएनन्। एउटा विद्यार्थीलाई डाक्टरी शिक्षा दिने र सेवामा प्रवेश गर्नेसम्म पुर्‍याउँदा अभिभावकले एक करोडको हाराहारीमा खर्च गरेका हुन्छन्। त्यसरी पढेर आएका सन्तानलाई 'आफ्नै देशमा बस, काम पाइन्छ' भन्ने कुराको ग्यारेण्टी हुँदैन।

त्यत्तिकै लगानीले अमेरिका, फिलिपिन्स र दक्षिण अफ्रिकामा पाइलट पढेर आएका युवा, युवतीका पीडा झन् दर्दनाक छ। वर्षमा सरदर एक सय ५० जनाले पाइलट बाँकी ८ पेजमा

# भाग्ने र मर्ने सेनाका हाकिमहरूको भरमार

नेपाली सेनामा हाकिमहरू हराउने, भाग्ने, लुक्नेजस्ता काम पहिल्यैदेखि हुँदै आएको हो। त्यसैले अहिले डोल्पाका गुल्मपति हराएको घटना नयाँ हैन।

मेजर विमला पण्डित कहाँ छन् ? यो प्रश्नको जवाफ न जंगी अड्डासँग छ, न त उनका परिवारसँगै। सेनाका हाकिमदेखि काठमाडौं ब्रम्हखेलस्थित उनका गाउँलेसम्मको एउटै ठहर छ, 'झिल्केमिल्के स्वभाव थियो, केटीकै कारण केही तनाव पनि झल्किन्थ्यो। कोही महिलाको साथमा कतै बिन्दास भएर बसेका होलान् !' हराउनु अघिल्लो दिन नन्दबक्स गणअन्तर्गतको गुल्मका सिपाहीहरूसँग भन्दै थिए, 'माथि डाँडाबाट ड्रोनले रेकी गरेको छ, कुन दिन दुश्मनले व्यारेक हान्छ !' यसो भनेको भोलिपल्टबाट बेखबर छन्। बाहिरबाट स्थानीय जडिबुटी र फलफूलले तयार पारिएका मदिरा व्यारेकमै ल्याउने, पिउने आदत थियो। अबदेखि रक्सी छाड्छु भन्दै सिगरेट पिउने लत बसालेका उनी भदौ १० गते आइतबार व्यारेकबाट नुहाई-धुवाई गरी मेकअपमा निस्किएका थिए। टाउकोमा तेल हाले, शरिरमा अत्तर छर्किए र त्यो अत्तर खल्तीमै हाले। डेटिङ हिँडेजस्तो शैलीमा निस्किएका उनी हराइरहेको योबेलासम्म विभागदेखि परिवारसम्मको अनुमान छ, 'कतै न कतै रमाइलो गरेर बसिरहेको होला।' किनभने, उनको स्वभाव नै त्यस्तो थियो। उनलाई खोज्न खटाइएका विभिन्न बाँकी ८ पेजमा

## बैठक त बस्दैन, कहाँ फुट्नु बोली !

भूगोल र जनसंख्या दुबै हिसाबले विश्वका दुई शक्तिशाली देश चीन र भारत सीमा विवादकै कारण पटक-पटक आमने-सामने भएको उदाहरण आँखैअगाडि छ। देशको अस्तित्वसँग जोडिने आफ्नो भूगोलको रक्षा गर्न शक्तिशाली देशले मात्र होइन, साना मुलुकले समेत ठूलो धनराशि खर्च गरिरहेका हुन्छन्। नेपालकै सन्दर्भमा पनि आफ्नो जमिन गुम्न नदिन पुर्खाहरूले रगत बगाएको गर्विलो इतिहास छ।

इतिहासमा कहिल्यै पराधीनता स्वीकार नगरेको नेपाल पटक-पटक सीमा अतिक्रमणको चपेटा भने भोगिरहेको छ। सुगौली सन्धिदेखि आफ्नो भूमि गुमाउन थालेको नेपालले हजारौं हजार हेक्टर भूमि गुमाइसकेको विभिन्न तथ्यांकहरूले देखाएका छन्। आफ्नो भूगोलको रक्षाका लागि पटक-पटक लडाइँ लडेका छिमेकी चीन र भारतकै कारण नेपालले सीमा समस्या झेल्नुपरेको हो। खुला सीमा र 'रोटीबेटीको सम्बन्ध' भनिएको भारतसँग सीमा विवाद नयाँ होइन। तर, पछिल्लो समय चीनले समेत नेपालको नक्सालाई उपेक्षा गरेर नयाँ राजनीतिक तथा प्रशासनिक नक्सा जारी गरेपछि नयाँ ढंगको विवाद प्रकट भएको छ।

लामो समयदेखि भारतद्वारा अतिक्रमित कालापानी, लिपुलेक, लिम्पियाधुरा क्षेत्र समेटेर नेपालले नयाँ राजनीतिक नक्सा जारी गरेको थियो। कालापानी क्षेत्र कब्जा गरेर बसेको भारतले उक्त नक्सा स्वीकार गरेको छैन। आफ्नो जमिनका लागि भारतसँग लडाइँ लड्ने चीनले समेत नक्सा (चुच्चे नक्सा) किन स्वीकार गरेन ? तुलनात्मक रूपमा नेपालको सार्वभौमिकता र स्वतन्त्रताप्रति चीन बढी संवेदनशील छ भन्ने गरिन्छ। तर, नेपालको संसदबाट दुई तिहाइ बहुमतले पारित भएको बाँकी ८ पेजमा

## बागदरबारमा बालेनका विज्ञ बग्रेल्ती

काठमाडौं महानगरपालिकाका मेयरमा बालेन्द्र साहको उदय भएपछि त्यहाँ हुने भ्रष्टाचार शून्यमा झर्‍यो होला भन्ने आमबुझाइ हुन सक्छ तर स्थिति त्यस्तो देखिँदैन। कर्मचारीतन्त्रमा हुने कमिशनको खेल केही रोकिए पनि विज्ञका रूपमा अनेकन सल्लाहकार नियुक्त गरेर महानगरलाई आर्थिक भार बोकाइएको छ। अर्कोतिर बालेन साहको समूहले सेटिङमा डेभलप गरेको एउटा सफ्टवेयर ९ महिनादेखि नचल्दा जनप्रतिनिधिले उस्तै हैरानी खेपिरहेका छन्।

मंसिरमै वसन्तपुरमा तामझामसाथ लञ्च गरिएको थियो, इ-सिफारिस, इ-सिग्नेचर, मेट्रोलगायतका एप्स तर ९ महिना भइसक्दा पनि राम्रोसँग नचल्ने र तारन्तार इरर मात्र देखाउने गरेको छ। बालेनले आइटी सल्लाहकार बनाएका छन्, सुदिप ढकाललाई। यसअघि रूपन्देहीको तिलोत्तमा नगरपालिकामा इञ्जिनियर थिए। मंसिरदेखि नै बालेनको सचिवालयमा विज्ञ सल्लाहकार रहेका ढकालले साउन २३ गते राजीनामा दिएको बुझिएको छ। बालेनका वातावरण सल्लाहकार सुनिल लम्सालकै अनुरोधमा ढकाललाई महानगरको सूचना प्रविधि विज्ञका रूपमा नियुक्ति दिइएको थियो। बालेन आएपछि बनेका एप्सदेखि इ-सिफारिससम्मको कामसमेत ढकालले नै आफू निकटस्थ कम्पनीमार्फत गर्न लगाएर लाखौं रकम हिनामिना गरेको आरोप जनप्रतिनिधिले लगाउने गरेका छन्। हरेक वडामा डिजिटल प्रविधिमैत्री भन्दै जति पनि काम भइरहेको छ त्यसमा उनै सुदिपको बाँकी ८ पेजमा

## सिआइबीले विदेशमा पनि समातेको समात्यै

विदेशतिरै अपहरणको डरलाग्दो जालोभित्र नेपाली पर्ने, यताबाट नेपालीले नै फिरौतीका निम्ति बाहिरका अपराधीसँग मिलेमतो गर्ने गम्भीर घटनाको खुलासा भएको छ।

नेपालबाट सिजनल भिसामा मध्य तथा दक्षिणपूर्वी युरोपको सर्बिया पुगेका तीन नेपाली टर्कीको सिमानामा अपहरणको शिकार बनेका छन्। वैदेशिक रोजगारीका लागि त्यहाँ पुगेका मोरङ, रंगेलीकी २५ वर्षीया सावित्रा थापा, उदयपुरका कृष्ण कार्की र काभ्रे, मथुरापाटीका ३० वर्षीय राजन सत्याल जेठको १२ गते अपहरणमा परेका थिए। उनीहरू सर्बियामा चित्तबुझ्दो काम नपाएर लुक्दैभाग्दै ग्रिस छिर्न लाग्दा त्यहाँको प्रहरीले टर्कीको सिमानामा पुर्‍याइदियो। त्यहाँ उनीहरूले एउटा पाकिस्तानी समूह भेटे, जसलाई आफूहरू नेपालबाट काम खोज्दै हिँडेको बताए। त्यहीँबाट दशा शुरु भयो। काम दिलाउलान् भनिएका ती व्यक्तिले उल्टै नियन्त्रणमा लिए। अर्थात्, अपहरण गरे र हातखुट्टा बाँधेर प्रतिव्यक्ति पाँच हजार युरो माग्न थाले।

उनीहरूले नेपालमा रहेका आफन्त र साथीहरूमार्फत केही रकम जुटाए। उक्त रकम दुबई बस्ने पाकिस्तानीका सम्पर्क व्यक्तिसम्म पुर्‍याउनुपर्ने भयो। त्यसक्रममा दुबईमै रहेका नेपालीमार्फत उक्त रकम दिने सिलसिला शुरु भयो। 'नेपालको यो ठाउँमा पैसा बुझाइदेऊ, मान्छे छुट्छ' भनेपछि काठमाडौंबाट सिआइबीका एकजना डिएसपी पीडितको भेषमा गौशाला पुलिससँग मिलेर बाँकी ८ पेजमा

## पारससामु कमल प्रकट

'भूल भयो सरकार' भन्दै राजावादी नेता कमल थापा गत शनिबार साइकल चढेर मण्डिखाटारमा झुल्किए। जवाफ पाए, 'गर्नसक्ने त तिमी नै हौ !'

मुटुमा समस्या आएपछि ह्याम्स अस्पतालमा उपचारार्थ भर्ना गरिएका पूर्वयुवराज पारस शाहलाई कमल अप्रत्यासित रूपमा भेट्न पुगेका थिए। शरिरमा कोलेस्ट्रोल र ट्राइग्लिसवेराइड (टिजी) बढेपछि पारसलाई मुटुको समस्या भएको थियो। रगतमा जम्ने बोसो बाक्लिएर मुटुका धमनीमा अवरोध हुँदा यस्तो समस्या आउँछ। तर, पारसको स्वास्थ्यमा उल्लेख्य सुधार भएको कुरा उनैले कमल थापालाई सुनाए। कमलचाहिँ बिरामी भेट् नभन्दा बढी पहिलाका कुराले पूर्वराजपरिवारको मन दुखाएकोमा प्रायश्चित गर्दै त्यहाँ पुगेका थिए। भने, 'सरकार, राजनीतिमा कहिलेकाँही यस्तो हुँदोरहेछ !' पारसको बाँकी ८ पेजमा

## उता उत्तर, यता अमेरिका

उत्तरबाट जे अपेक्षा छ, पश्चिमाहरू त्यही गर्दैछन्। दुबैतिर खुशी पार्नुपर्ने परिबन्दले च्यापेपछि भिन्नभिन्न प्रस्ताव बनाइएको छ।

विद्युत परियोजनामै आधारित रहेर अमेरिकी संस्था एमसिसीले नेपालमा आफ्ना औपचारिक गतिविधि शुरु गर्दैछ। यही अवस्थामा नेपालले चीनसँग पनि विद्युतकै स्वार्थमा आधारित भएर कुराकानी अगाडि बढाउने भएको छ। प्रधानमन्त्री पुष्पकमल दाहाल 'प्रचण्ड' को चीन भ्रमणताका नेपालका केही माग यस्ता छन् जो पूरा हुँदा काठमाडौंमा विद्युतीकरणका आधारभूत विषयहरू हल हुन्छन्, चीन पनि लाभान्वित हुनसक्छ। चीनले दिन्छ, दिँदैन त्यो उसको कुरा भयो। तर, नेपालले माग्ने सूचीमा भने विभिन्न बुँदा छन्, जुन प्रम प्रचण्डको भ्रमणमा पेश गर्न लागिँदैछ।

उपत्यकाका निम्ति सन् २०५० सम्मको विद्युत भार वहन गर्नसक्ने ठूलो संरचनाको डिजाइन गरिएको छ। कुनै बाँकी ८ पेजमा

## अर्थतन्त्र उकास्ने कसको आँट !

संकटग्रस्त अर्थतन्त्र सम्हाल्नुपर्ने छ, तर जिम्मेवार पदाधिकारीलाई त्यतातिर ख्याल छैन। प्रधानमन्त्रीदेखि सत्तासाझेदार दलका सबै नेता यो तीतो यथार्थ मान्छन्, तर मान्छे फेरिँदैनन्।

अर्थमन्त्री डा.प्रकाशरण महतको सन्दर्भमा यस्तो भएको हो। उनले काम गर्न सकेनन् भन्नेमा प्रधानमन्त्री, उनकै पार्टीका सभापति शेरबहादुर देउवादेखि साझेदार नेताहरू सबै एकमत देखिन्छन्। तर, अर्को ल्याऔं भन्दा कोही तयार हुन्नन्। संकटलाई हल गर्ने आर्थिक योजना र कार्यक्रम ल्याउनुपर्ने हो। 'इकोनोमिकल रिल्याक्स' का कार्यक्रमहरू मुलुकका लागि अत्यावश्यक छ। तर, अर्थतन्त्र संकटउन्मुख छ भन्ने कुरा नै मन्त्री स्वीकार गर्दैनन्। गठबन्धनको बैठकमा अर्थमन्त्रीकै कारण सत्तारुढ गठबन्धन बदनाम हुने भयो भन्नेसम्मको कुरा उठेको छ। तर, स्वयं देउवा आफ्नो मान्छे फुत्किने कारण बोल्न चाहनुहुन्न। त्यसमाथि गठबन्धन दलभित्र ब्रेक थ्रु गर्ने काविल अर्थशास्त्रीको अभाव छ। यो बाँकी ८ पेजमा

# रंगिला हाकिमलाई हेर्न सिंहदरबारमा रमिता

नाम होस्, बदनाम होस्, गुमनाम नहोस् ! यो उखान ठ्याक्कै मेल खान्छ एक जना उपसचिवको हकमा। उनी कुनै सेलिब्रिटी होइनन्, दमक नगरपालिकामा रहँदा रंगीला काण्ड लागेर सिंहदरबार तानिएका थिए। अधिकांश समय मास्क लगाएर हिँड्छन्। लामो समय स्थानीय तह, गृह प्रशासन, उद्योग मन्त्रालय मातहत बसेका कारण सामान्य प्रशासन मन्त्रालयबाट अन्य मन्त्रालयका साथीसंगीलाई भेट्न पुग्छन्, त्यहाँ डम्बरु निरौला आएको खबर क्षणभरमै आगोझैं फैलिन्छ र उनको दिव्य मुहारको दर्शन गर्न कर्मचारीको भीडै लाग्छ।

साउन दोस्रो साता निरौलाले नगरपालिकाको क्वार्टरभित्रै एक डिभोर्सी महिलासँग मदिरामा लठ्ठ भएर चुम्बन गरेको भिडिओ सामाजिक सञ्जालमा छरपष्ट भयो। त्यसपछि सामान्यले अतिरिक्त समूहमा राखेको छ २४ साउनदेखि। डमरुको ठाउँमा सामान्यले उपसचिव गणेशराज कार्कीलाई झापा खटाएको छ। दुई छोरीसहित श्रीमती सिनामंगलमा बस्छिन्। परस्त्रीसँग अश्लील हर्कतमा जोडिएका डम्बरु जता पुग्छन्, त्यहाँ कर्मचारीको भीड लाग्छ। आइतबार जनआस्थाकर्मी उद्योग मन्त्रालय पुग्दा डम्बरु एक जना कर्मचारीको कार्यकक्षमा बसिरहेका थिए। डम्बरु आएको खबर आगोसरी फैलिनासाथ पहिलो, दोस्रो होइन पाँचौं तलामा रहेका कर्मचारी पनि अनुहार हेर्ने बहानामा उक्त कोठामा छिरिरहेका थिए। बाँकी ८ पेजमा

# सात गाउँ चहारेपछि बल्ल भेटियो केपी ओली बस्ने कुर्सी

भदौ १३ गते बुधबार मदन भण्डारी महासचिव बनेको गाउँ सिरहाको धनगढीमाई १३, सर्रे अम्बास एमालेका शीर्ष नेतामय बन्यो। विराटनगर हुँदै बेलैमा अम्बास पुगेका ओली कसैसँग बोल्ने र भलाकुसारी गर्ने मुडमा देखिँदैन थिए। उनी सहयोगीहरूसहित सरासर तत्कालीन मालेको चौथो महाधिवेशनस्थल दुईतले काठेघरको टाँडमा चढे। सचिवालय बैठक लेखिएको ब्यानर हेरे। र, ब्यानर अघिल्तिरको कुर्सीमा बसे। स्थानीय मिस्त्रीले बनाएको काठे कुर्सी हेर्नलायकको थियो।

बैठक व्यवस्थापनको मुली सिरहा एमाले अध्यक्ष चन्देश्वर मण्डलले यो कुर्सी सात गाउँ चहारेपछि बल्ल फेला पारेका थिए। बैठकमा सहभागी अन्यलाई प्लाष्टिकको कुर्सी सहजै उपलब्ध भए पनि ओली बस्ने कुर्सी जुटाउन गाह्रो परेको थियो। चोहर्वा घर भएका एमाले नेता तथा प्रतिनिधिसभा सदस्य लीला श्रेष्ठको निर्देशनमा ओली बस्ने कुर्सी खोजिएको हो। सात गाउँ चहारेपछि एमाले सिरहाका सल्लाहकार चौधरी महतोले ओली बस्ने कुर्सी बल्ल तल्ल फेला पारे नथु मगरको घरमा। अम्बासका नथुले यो कुर्सी पाहुना आएका बूढाखाडाको लागि बनाएर राखेको चौधरी महतोले जानकारी दिए। अग्राखैअग्राखबाट बनाईएको कुर्सी बोक्न २ जनालाई हम्मे पर्छ।

सचिवालय बैठक सकिएपछि चौथो महाधिवेशन स्मारक शिलान्यास गरे ओलीले। लगत्तै उतिबेला महाधिवेशन सम्पन्न गर्न भूमिका खेलेकाहरूलाई सम्मान गरियो, मञ्चमा। फेरि शुरु भयो उही कुर्सीको कथा। प्रमुख अतिथि ओलीलाई आसन गराउन टाँडबाट फेरि झारियो उक्त कुर्सी। त्यसपछि ओलीले एमालेले देश विकासको लागि अहं भूमिका खेलेको बेलिविस्तार लगाए। अम्बासको विकास गर्ने वाचा गरे।

**नेताहरूको गाडी प्रेम**

महासचिव शंकर पोखरेल, पूर्वसभामुख सुवास नेम्वाङ, सचिव गोकर्ण विष्टलगायतले ज्यान जाला गाडी छाडेनन्। सर्रे खोलामा आएको बाढी सुक्ने क्रममा भए पनि बगरमा दलदल भने कायमै थियो। करिब ५ ठाउँमा सर्रे खोला तरेपछि मात्रै पुगिन्थ्यो बैठकस्थल। बाटामा भास्सिएका गाडी निकाल्न सुरक्षाकर्मीलाई धौ-धौ परेको देखिन्थ्यो। एमाले उपाध्यक्ष रामबहादुर थापा बादल हिँडिरहेको अवस्थामा भेटिए। पूर्वगृहमन्त्रीसमेत रहेका बादल हातमा मोजा बोकेर बैठकस्थलतर्फ लम्किँदै थिए। 'बीचबीचमा खोला तर्नुपर्ने र मोजा भिज्ने भएकाले हातमा बोकेर हिँडेको हुँ' बादल जनआस्थासँग गफिए, 'बाटो पनि हिलाम्मे रहेछ। तर, धेरै समयपछि खोला र खेतका आलीमा हिँड्न पाउँदा रमाइलो लागेको छ।' एक्लै हिँडिरहेका उनले जनआस्थासँग माओवादी युद्धताका हिँडाइको पनि संक्षेपमा वर्णन गर्न भ्याए। 'साँच्चै टेकबहादुरको के छ ?', स्थानीय तह चुनावलगत्तै माओवादी केन्द्रमा फर्किएका एमाले केन्द्रीय सदस्य महोत्तरीको बर्दिबास - ७ हात्तिलेड निवासी टेकबहादुर बलम्पाकीबारे जिज्ञासा राखे बादलले, 'सल्लाहै नगरी एमाले छोडेर टेकबहादुरले गल्ती गर्‍यो।' बर्दिबास नगरपालिकाको मेयरमा हारेपछि अन्तर्घात भयो भन्दै एमाले छाडेका उनी बादलका विश्वासपात्र थिए।

पैदलयात्रामा एमाले वरिष्ठ उपाध्यक्ष ईश्वर पोखरेल र सचिव प्रदीप ज्ञवाली पनि भेटिए। उपाध्यक्ष पोखरेल भने थकित मुद्रामा थिए। बैठकस्थल आइपुग्नै लाग्दा जनआस्था प्रतिनिधिको स्प्लेन्डर मोटरसाइकल चढेर गए उनी। पोखरेललाई बाइक बाँकी ७ पेजमा

## नोट अफ डिसेन्ट



लेखनाथ भण्डारी

# टेकनाथको कहाँ छ र बरै टेक्ने ठाउँ !

*भोलि उठी कहाँ जाने केही थाहा छैन*
*फर्की आउने हो कि होइन केही थाहा छैन।*

भुटानी राजा खुशी होलान् र नेपाली भाषीलगायतका अल्पसंख्यकले सुख पाउलान् भन्ने आशासहित टेकनाथ रिजालले जनताका समस्या जाहेर गरेका थिए। तर उल्टै राजाको कोपभाजनमा परेपछि शरण लिन आएका उनलाई नेपाल सरकारले अपहरणको शैलीमा समातेर 'कराईबाट भुङ्ग्रो'मा पुर्‍यायो। रिजाललाई जिम्मा लगाएवापतको फिरौती रकम केही नेपाली नेता र राजनीतिक पार्टीले प्राप्त गरेका विवरण पनि सार्वजनिक भएका छन्।

रिजालको ठाउँमा अरू कोही हुन्थ्यो भने सायदै दोहोर्‍याएर नेपाल फर्किन्थ्यो ! शरणको मरण गर्नुहुन्थेन। तर नेपालका तत्कालिन राजाले भुटानी राजालाई खुशी पार्न कुनै राष्ट्रिय वा अन्तर्राष्ट्रिय नियम कानूनको पालना त गरेनन् नै मानवीय संवेदनाको पनि ख्याल गरेनन्। उदारवादी राजाको छवि बनाउँदै गएका वीरेन्द्रको मानवताविरुध्दको यो कलङ्क इतिहासले नबिर्सने घटना हो।

रिजाल भुटान सरकारबाट देश निकालामा परेका र संयुक्त राष्ट्रसंघीय शरणार्थीसम्बन्धी उच्च आयोग (युएनएचसीआर) को अभिलेखमा नपरेका व्यक्ति हुन्। यस्तो 'स्टाटस'मा अन्य कुनै व्यक्ति नहोला। जो राज्य विहिन त छँदैछ तर शरणार्थीको अभिलेखमा पनि छैन। तर उनैको नेतृत्वमा प्रजातन्त्र र मानवअधिकारको माग गर्दै भुटान छोडेका करिव सवा लाख मानिसलाई युएनएचसीआरले भुटानी शरणार्थीको अभिलेख राखेर अमेरिका, क्यानाडा, अष्ट्रेलियालगायतका ८ वटा विकसित देशहरूमा पुनर्वास गराइसकेको छ।

भुटानी राजाको सल्लाहकार परिषदजस्तो राजकीय पदमा हुँदाहुँदै राजाकै कोपभाजनमा परेपछि शरण लिन आएका रिजाललाई समातेर बुझाइएपछिको एक दशकभन्दा लामो समय भुटान सरकारले उनलाई जेलमा राख्यो।

टेकनाथ अहिले पनि भुटानी राजाविरुद्ध भुटानमा कुनै नेपाली भाषीले आन्दोलन गरेको स्वीकार गर्दैनन्। उनको भनाइ हो- 'दमन सहन नसकेपछि नेपाली भाषीले भुटान छोड्न बाध्य भएका हुन्। छोड्न वाध्य बनाइएकाहरूले बाहिर आएर दमनको विरोध गर्नु स्वभाविक हो।' बाँकी ७ पेजमा

आस्था प्रकाशन प्रा. लि.को निमित्त

सम्पादक : किशोर श्रेष्ठ
प्रबन्ध सम्पादक : राजेन्द्र स्थापित
कार्यकारी सम्पादक : विश्वमणि सुवेदी
कार्यालय : सानेपा, ठाडोढुंगा, ललितपुर
फोन : ५५४१५५२, ५५२२५५१
इमेल : jana . aastha@gmail . com
वेबसाइट : www . janaaastha . com
मुद्रण : सुजल अफसेट प्रेस, बागबजार, फोन : ४२३३४५९

## सम्पादकीय

# कुरा नगरी काम मात्रै गरिरहन मिल्दैन !

देशकै बिडम्बना भन्नुपर्छ, तालतालका जनप्रतिनिधि, अनि परिभाषित कानुन निर्माणको जिम्मेवारी पूरा नगर्ने संसद ! यस्तो भएपछि जनतामा वितृष्णा बढ्ने र रंग-ढंग नपुगेकाहरू चुनाव जितेर आउँदै फेरि उही ताल हुने ।

वीरगञ्जका मेयर राजेशमान सिंह, धनगढीका गोपाल (गोपी हमाल) हरूले गरेका काम राम्रा छन्, जनता पनि सन्तुष्ट । तर, हल्ला छैन, कुनै काण्डमा पर्दैनन् । उता धरानका मेयर हर्क साम्पाङ, र काठमाडौंका बालेन साहलाई हेर्ने हो भने दिनहुँ एकपछि अर्को काण्ड । धरानमा त खानेपानीका नाममा डाँडा चढेरै मेयरको एक वर्ष बित्यो । यसबाहेक जनताले अनुभूति गर्ने गरी त्यहाँ खासै काम भएको छैन । धरानमा खानेपानीबाहेकका समस्या पनि छन्, मेयरलाई त्यतातिर ध्यान छैन ।

यता, काठमाडौंमा बालेनको जात्राले हाँडीगाउँ माथ खाने भइसकेको छ । बिदाको दिन पास नलिई सरकारी गाडी चलाउन नपाइने नियम नै हो । मेयरकी पत्नी सुत्केरी भएर वा अरु कुनै कारणले त्यस्तो गाडीमा सवार भइन् भने पनि ट्राफिक प्रहरीसँग सोधपुछ त के नियन्त्रणमै लिने अधिकार हुन्छ । तर, जम्मा केही सेकेण्ड मेयरपत्नी सवार गाडी रोकेर सोधपुछ गरिदिएबापत बालेन शनिबार साँझ उम्लिए, सिंहदरबारमा आगो लगाइदिने भन्दै । प्रश्न उठेको छ, यस्तो अराजकता कतिञ्जेल ? यस्तोमा अनुशासन लाग्ने कहाँबाट ?

प्रधानमन्त्री शोक वा अन्य कुनै निजी काममा व्यस्त भए देश ठप्प ! विभिन्न बहानामा संसद दिनैपिच्छे अवरुद्ध । कानुन बनाउनुपर्ने, भएका कानुनमा त्रुटी भए सुधार्नुपर्ने काम संसदको हो । तर, त्यहाँ विधेयक नै जाँदैन । प्रत्येक विधेयकमाथि सरोकारवालाको यति ठूलो चासो हुन्छ कि, तिनले शक्तिकेन्द्रलाई आफ्नो मुठ्ठीमा कसेर सार्वभौम संसदलाई नै बिलखबन्दमा पारिदिन्छन् । उनीहरूको राजनीतिक दलसँग सम्बन्ध सीधै हुन्छ । शिक्षा विधेयकमा त्यस्तै भयो । शिक्षक संघ, महासंघ, प्याब्सन, एनप्याब्सनहरूको चासो उत्तिकै । शिक्षा ऐन २०२८ लाई प्रतिस्थापन निम्ति गत साउन १६ मा बसेको मन्त्रिपरिषद् बैठकले विद्यालय शिक्षासम्बन्धी कानुनलाई संशोधन र एकीकरण गर्न बनेको विधेयक संसदमा पेश गर्न स्वीकृति दियो । तर, संसद सचिवालयमा दर्ता भएन । ०७२ सालदेखि मस्यौदा बन्दै, थन्किँदै गरेको विधेयक मन्त्रिपरिषद्ले अगाडि बढाउँदा पनि संसदमा नपुग्नु आफैंमा उदेकलाग्दो छ । विद्यालय शिक्षासँग सम्बन्ध राख्ने निजी क्षेत्रका संस्थाहरूले कम्पनीमार्फत सञ्चालित विद्यालयहरूलाई पाँच वर्षभित्र गुठीमा रुपान्तरण र दायित्व फरफारक गर्ने कुराको विरोध गरेका छन् । यदि त्यसरी विधेयक अगाडि बढेमा विद्यालयदेखि सडकसम्म तताउने उनीहरूको चेतावनी छ । त्यही कारण विधेयक संसदमा दर्ता हुन सकेन । जबकि, संसदजत्तिकै मन्त्रिपरिषद् पनि अधिकारसम्पन्न हुन्छ । सार्वभौम संसदले अनुमोदन गरेको विषयमा मन्त्रिपरिषद्ले निर्णय गर्नु र त्यो कार्यान्वयन नहुनु सानोतिनो कुरा होइन । किनभने, यो देशमा संसदपछि मन्त्रिपरिषद्भन्दा माथि निर्णय गर्ने कुनै पनि निकाय र संस्था छैन ।

शिक्षामै त यत्रो तानातान छ भने आर्थिक स्वार्थसँग गाँसिएका अनगिन्ती विधेयक त्यही हालतमा छन् । अघिल्लो संसदमा भएका विधेयकहरू यो संसदले स्वामीत्व ग्रहण गर्दै अगाडि बढाउनुपर्ने हो । तर, सबै फर्किएर आएका छन् । कानुन बनाउने ठाउँकै त यो हालत छ भने अन्तको के कुरा गर्नु !

DISCOVER AND
EXPERIENCE
14
MANAKAMANA CABLECAR
manakamanacablecar.com info@manakamanacablecar.com cablecarmanakamana manakamanacablecar

# जमाना बदलिएको कसले हेर्ने जोखना ?

दिनेश रायमाझी



पार्टी माने म भन्ने जमाना छैन । याक चुरोट खाँदा गोली खान पर्दैन र कसैले कसैलाई टंक कार्की बनाउन पनि सक्दैनन् आज । किनभने नेतृत्व भनेको के हो र कस्तो हुनुपर्ने रहेछ भनेर धेरैजसोले बुझिसके । कतिसम्म भने ओली कमरेडको चुच्चे रेल ल्याउने कुरा होस् कि, माधव कमरेडको एमाले फुटाएर ठिक गर्‍यौं भन्ने कुरा होस् कि, प्रचण्डको समृद्धि ल्याउँछु भन्ने दाबी होस्, उनीहरूकै धेरै कार्यकर्तालगायत बहुसंख्यक जनताले ती भनाइमा वास्तविकता देखेनन् र त्यसप्रति खासै चासो राखेनन् । यस्तो किन हुन गयो भने उनीहरूको भनाइ र गराइमा सामञ्जस्यता थिएन र साथसाथै ती विषय जनताको समस्यासँग सरोकार राख्ने खालका पनि होइनन् । चुच्चे रेल चीनबाट नेपाल ल्याउन कति खर्च लाग्छ र कति समय लाग्छ भन्ने मूल कुरालाई लुकाएर, मनको लड्डु घ्यूसँग खाने भनेजस्तो, असम्भव त नभनौं तर निकट भविष्यमा बनाउनै नसकिने कुरा भनेपछि जनताले पत्याउने कुरा भएन । माधव कमरेड र प्रचण्डका दाबी पनि ओली कमरेडका जस्तै हुन् ।

आज जनताको हातमा सत्य सूचना भएको समय हो । कर्पोरेट वा सरकारी मिडियाको हातबाट आम मानिसले सत्य समाचार संप्रेषण गर्ने पहलकदमी र जिम्मेवारी दुबै आफ्नो हातमा लिइरहेका छन् । अब सुत्केरीको गाडी रोकेर प्रहरीले दुःख दियो भन्दै आफ्नो कमजोरी लुकाउन सकिन्न भन्ने कुरा रुटिन अफ नेपाल बन्द भन्ने साइट बन्द गर्नुपर्ने अवस्था आइपर्नुले पनि पुष्टि गरेको छ । राजनीति भनेको विभिन्न विषयजस्तो इतिहास, संस्कृति, अर्थतन्त्र, समाज, साहित्य, उद्योग, कृषिलगायत धेरै कुरालाई राम्रोसँग बुझ्ने र त्यसलाई जनताको हितमा प्रयोग गर्ने माध्यम हो । जनताले चुनावमा किन भोट हाल्न जान्छन् भने उनीहरूले जीवनमा भोग्नुपरिरहेका मुख्य समस्या समाधान गरिदिन्छन् भनेर हो । तर, जब राजनीतिक नेतृत्वले जनताको समस्यालाई उपेक्षा गर्छन्, आफ्नो हितमा सत्ताको उपयोग गर्छन् त्यसपछि जनताले उनीहरूमाथि विश्वास गर्न छाड्छन् । यद्यपि, प्रचण्ड देशको बहालवाला प्रधानमन्त्री हुन् आजको दिनमा तर उनीप्रति जनताको धेरै ठूलो हिस्साले विश्वास गर्न छोडेको छ । माधव, ओली र झलनाथ कमरेडहरूको कुरा पनि प्रचण्डकै जस्तो हो, धेरैले कम विश्वास गर्छन् । यस्तो किन भएको छ भने उनीहरू सैद्धान्तिक, वैचारिक तथा व्यवहारिक हिसाबले आफूले भनेअनुसार कहिल्यै चल्न सकेनन् । हालसालै एमालेले आफ्नो केन्द्रीय सचिवालय बैठक गरेको तराईको घर हेरेरै थाहा हुन्छ विगत के हो र किन वामपन्थी आन्दोलनमा लाग्या हो भन्ने कुरा । तर आज कस्तो छ भन्ने कुरा त बालकोटको बार्दली हेर्दा थाहा भइहाल्छ । नेताहरू प्रति जनताको भरोसा यसरी उठ्नु भनेको राजनीतिमा असफल भएको प्रमाण हो । असफल राजनीति बोकेर बसिरहनु राम्रो होइन । यस्तो गर्दा राम्रो रहेको इतिहासमा पनि धब्बा लाग्न सक्छ ।

**अब सुत्केरीको गाडी रोकेर प्रहरीले दुःख दियो भन्दै आफ्नो कमजोरी लुकाउन सकिन्न भन्ने कुरा रुटिन अफ नेपाल बन्द भन्ने साइट बन्द गर्नुपर्ने अवस्था आइपर्नुले पनि पुष्टि गरेको छ ।**

अहिले पनि कम्युनिष्टहरू जनताको मुद्दामा अत्यन्तै असंवेदनशील देखिन्छन् । यिनीहरूलाई चुनाव जित्न जनता चाहिन्छन् तर जनताको समस्याबारे चासो नै छैन । विभिन्न प्रकारका कार्यक्रम लिएर जनतामाझ गएका त छन् तर त्यहाँ जनताका मुद्दा छैनन् । महँगी यसरी बढेको छ कि जनतालाई गुजारा गर्न मुश्किल छ । आम्दानीको कुनै स्रोत छैन । मजदुरको आम्दानीबाट दाल, तेल, चामल किन्न सकिने अवस्थासमेत छैन । ग्यास उस्तै महँगो छ । लुगाफाटो त ल पुरानै लगाउलान् तर के पेट नभरि बाँच्न संभव छ ? सरकारले त महँगी बढाएकै छ तर प्रमुख प्रतिपक्षी दलको राजनीतिक जिम्मेवारी होइन र महँगाइबारे सदन र सडक तताउने र महँगी घटाउन सरकारलाई बाध्य पार्ने ? खोइ त महँगीविरोधी आन्दोलन चलाएको ? खोइ त जनतालाई उठ्न आह्वान गरेको ? जनताको समस्या नचिन्ने पार्टीलाई जनताले पनि चिन्न छोड्छन् विस्तारै विस्तारै । अहिलेसम्म त नेतृत्व मात्रै अक्षम हो भन्ने परेको छ । यस्तै रवैया रहिरहने हो भने जनताले पार्टीलाई नै अक्षम भनेर मान्नुपर्ने दिन पनि आउनेछ । पश्चिम बंगालको वामपन्थी दलको हार यत्तिकै भएको होइन । जनतासँग टाढिँदाको परिणाम थियो । समयमै चेत खुलेमा राम्रो होला ।

अन्त्यमा, बालेनको डोजर तथा प्रहरीको पहिरनमा काठमाडौंका सडकपेटी र गल्लीमा खटिएका आततायी डफ्फाले साइकलमा फलफूल बेच्ने, सिलेवरको भाँडामा मकै पोल्ने, पेटीमा बोरा र ढाकरमा सागसब्जी बेच्ने गरिबमाथि चलाएको श्वेत आतंक तालिवानीको हिंस्रक गतिविधिभन्दा कुनै हालतमा कम थिएन । गहभरि आँसु पार्दै जसले दिनभरिमा आफूसँग भएको सामान बेचेर जम्माजम्मी चार सय पनि नाफा कमाउन सक्दैनन्, तिनले दुईहात जोडेर ती जल्लादजस्ता नगर प्रहरीसँग आफ्नो सामान नखोसिदिन अनुनय-विनय गरेको दृश्य कम्ती हृदयविदारक थिएन ।

परै देख्नासाथ साइकल गुडाएर लुक्न हिँडेकालाई लखेटी-लखेटी समाती तिनको खाँचीमा भएको फलफूल लुटेको दृश्य पनि कम्ती मुटु पोल्ने त थिएन । झोलामा मास्क राखेर बेच्न हिँडेको त्यो गरिबको मास्क खोसेको दृश्य पनि सभ्य समाजमा हेर्न नसकिने नै थियो । तर, यस्तो मानवताविरोधी र बर्बरतापूर्ण काम गर्न आदेश दिँदै गर्दा बालेनलाई कुनै अफसोच लागेन । तर, आफ्नालाई तीन मिनेट सामान्य सोधपुछ गर्दा भने महाभारतको सम्झना भएछ । यो पनि कुनै हालतमा सही होइन । अब जनतासँग माफी माग्नुपर्छ र यस्तो घटना नदोहोऱ्याउने प्रतिबद्धता जाहेर गर्नुपर्छ ।




## बालेनको गाडी

*मेयर बालेन साह चढ्ने सरकारी गाडी कतै जाँदै थियो । ट्राफिकले रोक्यो । चेकजाँच चल्दै थियो । ट्राफिकले सोध्यो, 'कता हो हजुर ? गाडी त सरकारी हो । शनिवार चलाउने पास छ कि छैन ?'*

*चालकले भन्यो, 'यो पास लिने होइन, दिने मान्छेको गाडी हो । त्यसैले हामीलाई पास चाहिँदैन ।'*

*'हँ ?!', ट्राफिक झस्कियो, 'कसको गाडी यो ?'*

*'बालेन साहको गाडी हो ।'*

*'पारस साह रे ? पारस साह त आजभोलि बाइक चलाउनुहुन्छ । अनि उहाँ को नि ? हिमानी हो ?'*

*'पारस साह होइन, बालेन बालेन । बालेन साह । बालेन साहको गाडी हो ।'*

*'ए, बालेन साह पो ! अनि बालेन साहचाहिँ खोइ त ?'*

*'मलाई के थाहा । कहिल्यै भेटेको भए पो ।'*

*'बालेन साहको ड्राइभर भएपछि ड्राइभरले पनि भेटेको छैन भन्न मिल्छ ?'*

*'मेरो के कुरा सर, ऊ... उहाँ स्यामले त भेट्न पाउनुहुन्न । बिचरा एक्लै हस्पिटल गएर आउनुभएको छ । उहाँलाई श्रीमतीले त भेट्न पाउनुहुन्न भने ड्राइभरको के कुरा ?'*

*'तर हस्पिटल नै जाने भए पनि बिदाको दिन सरकारी गाडी चलाउन त पास चाहिन्छ । थाहा छ होला नि !'*

*'हेर्नोस्, हामीलाई नियम नसम्झाउनुस् । काठमाडौं महानगरपालिका भनेको आफैं नियम बनाउने निकाय हो । आवश्यक पऱ्यो भने भोलिदेखि पासै नचाहिने नियम बन्नसक्छ फेरि । बुझ्नुभयो ?'*

*'गजबको मान्छे हुनुहुँदोरहेछ तपाईं । ड्राइभर भएर पनि ट्राफिकसँग यसरी मुखामुख गर्ने हो ?'*

*'ड्राइभर भए पनि सानोतिनो ड्राइभर होइन नि ट्राफिक भाइ । बालेन साहको ड्राइभर हुँ । त्यस्तै पऱ्यो भने तपाईंले मेरो होइन म तपाईंको चिट काटिदिन सक्छु । बुझ्नुभयो ?'*

*'यस्तो धम्की नदेखाऊ भाइ । लौ आजलाई छोडें । भोलिदेखि पास लिएर हिँड्ने ।'*

*'ए...धम्की दिएको बालेनको ड्राइभरलाई ? ड्राइभरलाई धम्की दिएको बालेनले सहन सक्दैन । अबको एक घण्टापछि हेर् के हुन्छ ।'*

*गाडी अगाडि बढ्छ । त्यसपछि कति आगो बल्यो, त्यो सबैलाई थाहै छ ।*

## खोइ चुच्चे ?

*नेपालले बनाएको चुच्चे नक्सलाई भारतले त अस्वीकार गऱ्यो गऱ्यो, अब चीनले पनि अस्वीकार गरेको छ । नेपालले चुच्चे नक्सा जारी गरेको सबैलाई थाहा छ, चीनलाई मात्रै कसरी थाहा भएन ? सायद नेपालले चिनियाँ भाषामा जारी गरेन होला । त्यसैले चीनलाई थाहा भएन ।*

*चीनले सार्वजनिक गरेको नयाँ नक्सामा नेपालको पुरानै नक्सा छ । चुच्चेवाला छैन । चीनले यही बेला चुच्चो नभएको नक्सा किन जारी गरेको होला ? अस्ति मात्रै एकजना अमेरिकी नेपाल आएका थिए । नेपालले अबदेखि एमसिसी परियोजना लागू भयो भनेर घोषणा पनि गऱ्यो । फ्याट्ट यही बेला चीनको नक्सा आयो । यसो हेर्छु त चुच्चो गायब ! त्यहीबेला झट्ट एउटा बाल गीत याद भयो -*

*कुखुरी काँऽ*
*चुच्चोले भात खाँऽ*
*खोइ मेरो चुच्चो ?*
*चाइनाले खायो*
*खोइ चाइना ?*
*एमसिसी खोज्न गयो*
*खोइ एमसिसी ?*
*बत्ती बाल्न गयो*
*खोइ बत्ती ?*
*कुलमानले निभायो*
*खोइ कुलमान ?*
*बालुवाटारमा होला*
*खोइ बालुवाटार ?*
*सिंहदरबारमा होला*
*खोइ सिंहदरबार ?*
*बालेनले बाऽऽऽल्यो ।*

## एक पेग लेखाइ

*शनिबार बेलुका नगरपिता श्री बालेन साहको स्टाटस आएपछि नगर जल्न थालेको छ । उहाँको स्टाटस आउँदा अलि ढिलै भइसकेको थियो । त्यसो त बालेन साहको आगो बाल्ने स्टाटसहरू शुक्रबार र आइतबारबीच अलि बेलुकै आउने चलन छ । उहाँ आगो अक्सर बेलुकै मात्र बाल्नुहुन्छ । दिउँसो बाल्नुहुन्न ।*

*बालेन साहका कुनै एक पिएलाई मैले सोधेको थिएँ, 'मेयर साब अक्सर बेलुकै मात्र यस्तो लेख्नुहुन्छ । किन हँ ? उहाँको बिचार अलि बेलुका बेलुकातिर मात्रै फुर्ने हो कि ?'*

*पिएले भने, 'होइन । त्यस्तो खासै त केही होइन । शनिवार भयो कि बेलुका यसो एक दुई पेग लेखिहाल्ने बानी छ उहाँको ।'*

*'के रे ? एक दुई पेग लेख्ने रे ? लेख्ने पनि पेगमा हुन्छ ?' मैले नबुझेझैं गरी सोधेँ ।*

*'हुन्छ, ' पिएले भने, 'अरुको त था' छैन । मेयर साबको चाहिँ हुन्छ । उहाँ जति पनि लेख्नुहुन्छ, पेगमै लेख्नुहुन्छ ।'*

*'उसोभए अस्ति सिंहदरवार जलाउनेवाला स्टाटस जो छ नि, त्यो कति पेगमा लेख्नुभएको रहेछ ?'*

*'त्यो अलि लार्ज पेग पऱ्या जस्तो छ,' पिएले भने, 'तर पेग लार्ज-स्मल जे-जस्तो भए पनि त्यो लेखाइचाहिँ राम्रो हुनुपर्छ ।' उनले कुरा टुंग्याए ।*

# अमलाका दुई श्रीमान् ! त्यही श्रीमान्का तीन पासपोर्ट

थवाङ गाउँपालिका -२, रोल्पा घर भएकी अमला रोक्काका दुई श्रीमान् रहेको खुलेको छ । अमलाको मतदाता नम्बर २०६११०१९३ नम्बर उल्लेख छ । ०३६ साल जेठ २० गते जन्म मिति रहेको रोक्काको रोल्पाबाट जारी नागरिकता नम्बर ४४१०४ मा बाबु मूलमान र आमा उजला बताउने अमलाले पतिको नाममा सुजनप्रकाश रोक्का राखेकी छन् । मतदानस्थलमा साविक थवाङ गाविस भवन लेखिएको छ ।

२०७९ वैशाख २८ गते अध्यागमन विभाग, कालिकास्थान, काठमाडौंमा आगमन/प्रस्थान सहजीकरण गरिदिने सम्बन्धमा दिएको निवेदनमा दावाले भनेका छन्, 'नेपालको पर्यटक भिसामा बसिरहेको बेल्जियमको नागरिक म दावा छिरिङ राहदानी नम्बर इपी ४४४१०५ लाई अन्यत्र मुलुकमा जान र अन्यत्र मुलुकबाट नेपाल प्रवेश गर्नका लागि सहजीकरण गरिदिन हुन अनुरोध छ । दावा छिरिङको तर्फबाट निजकी श्रीमती श्री अमला रोक्का नागरिकता प्रमाणपत्र नम्बर ४४१०४/रोल्पा ।' दावाले निवेदनमा दायाँ बाँया ल्याप्चेसहित हस्ताक्षर गरेका छन् । यसरी अमला रोक्काको पहिलो श्रीमान् सुजन प्रकाश रोक्का हुन् भने दोस्रो श्रीमान् दावा छिरिङ ।

गृह मन्त्रालयले निमा तामाङको नागरिकता छानबिन गर्न गठन गरेको समितिले बुझाएको प्रतिवेदनमा अमला रोक्काका दुई श्रीमान् भएको उल्लेख छ । दावाले नेपाली नागरिकता निमा तामाङको नामबाट २०७४ पुस २० गते नमोबुद्ध ११ काभ्रेपलाञ्चोकको ठेगाना राखी लिएका छन् भने राहदानी पनि काभ्रेबाटै पाएका हुन् । उनले बाबुको नाम पेमा तामाङ राखेका छन् । एकै दिन नागरिकता लिएका पासाङ तामाङसमेत विदेशी भएको खुले पनि उनी कहाँ र कस्तो अवस्थामा छन् खुलेको छैन । छानबिन समितिले उनलाई समेत पक्राउ गरी आवश्यक कारबाहीका लागि सुझाव पेश गरेको छ ।

२०८० भदौ ११ गते छानबिन समितिले गृहसचिवलाई १ सय ६८ पृष्ठको प्रतिवेदन बुझाएको छ । उपसचिव कृष्णबहादुर कटुवालको संयोजकत्वमा बनेको समितिले १० वटा विषयमा अध्ययन गरेर प्रतिवेदन तयार गरेको थियो । सामाजिक सञ्जाल र सञ्चारमाध्यममा आएको समाचारहरूको खोजी र अध्ययन गरेको उसले तत्कालीन समय नागरिकता वितरणमा संलग्न अधिकृत झपेन्द्रराज खरेल, सुब्बा रामचन्द्र अर्याल, वडा अध्यक्ष भनिएकी सरस्वती पण्डित कार्की, वडा अध्यक्ष कृष्णबहादुर लामा र तत्कालीन प्रमुख जिल्ला अधिकारी शिव सिंखडा समेतसँग बयान लिएको छ । राहदानी विभागबाट लिएको राहदानीमा प्रयोग भएको औंठा छाप र नागरिकता अभिलेखमा उल्लेख भएको औंठाछाप फरक छ । समितिले ०७४ पुस २० गते ३०-०१-७४-११८६८ नम्बरको निमा तामाङको नागरिकता फोटोसहितको ढड्डा र सिएमआईएस अभिलेख रहेको तर अनुसूची १ फारम अभिलेख नभेटिएको तथा मौकामा गरिएको सर्जमिन मुचुल्का तथा छानबिन तहकिकातमा प्राप्त प्रमाणका आधारमा नागरिकता प्रमाणपत्र किर्ते जालसाजी गरी लिएकोले उक्त कार्यमा संलग्नलाई आवश्यक कानुनी कारबाही गर्न सुझाव दिएको छ ।

निमा तामाङका नाममा नेपाली राहदानीहरू १०७४२५५० र १०८०५८०८ जारी गर्दा राहदानी विभागमा सुरक्षित रहेको औंठाछाप बेल्जियम नागरिक दावा छिरिङको राहदानी नम्बर GA ४५९७३६४ को औंठाछापसँग मेल खाएको विधिविज्ञान प्रयोगशाला सामाखुशीबाट प्राप्त भएकाले प्रचलित कानुनबमोजिम कडा कारबाही गर्न सुझाव दिइएको छ । जिल्ला प्रशासन कार्यालय काभ्रेपलाञ्चोकमा तत्कालीन अवस्थामा र हाल कार्यरत सम्बन्धित शाखाका कर्मचारीसँग नभेटिएको अनुसूची फारमको विषयमा अनुसन्धान गरिँदा फेला नपरेकाले कारबाहीका लागि काभ्रेपलाञ्चोकलाई लेखीपठाउन निर्देशन भएको छ । उक्त प्रतिवेदन तोकादेश गरी कार्यान्वयन गर्ने नीति, योजना महाशाखा प्रमुख सहसचिव रुद्रादेवी शर्मा आफै सोमबारबाट काभ्रेको प्रमुख जिल्ला अधिकारी भएकी छन् । आफ्नै तोकादेशको कार्यान्वयन आफैं गर्ने स्थानमा आएकी शर्माको परीक्षा यही नागरिकताबाट शुरु हुने स्थानीयले बताएका छन् । दावा तामाङ र निमा तामाङ एकै व्यक्ति हुन् भन्ने कुरामा द्विविधा नरहेकाले निजलाई नेपालको प्रचलित कानुनबमोजिम नेपालको नागरिकता र राहदानीबाट हटाउनेतर्फ आवश्यक कारबाही र नेपालमा निजले गरेका अन्य कसुरका सम्वन्धमा प्रचलित कानुनबमोजिम आवश्यक कारबाही अगाडि बढाउन उपयुक्त हुने सुझाव दिइएको छ । उनी अहिले सिआइबीको हिरासतमा छन् । नागरिकता रद्द गर्ने अधिकार प्रमुख जिल्ला अधिकारीलाई रहने कानुनी व्यवस्था छ भने राहदानीको हकमा परराष्ट्र मन्त्रालयअन्तर्गतको राहदानी विभागलाई अधिकार हुनेछ ।

**तस्करीमा राजनीतिक सेटिङ**

सुन तस्करीमा संलग्न दावा अरु चिनियाँबाट कब्जा गरिएको भियना होटलका सञ्चालक हुन् । श्रीमती अमला रोक्काको नाममा होटल छ । सोही होटलमा सुनको विषयमा छलफल हुने गरेको अनुसन्धानबाट खुलेको छ । ठमेलमा रहेको भियना होटलमा राजस्व अनुसन्धान विभागको टोलीले छापा मारेपछि दावा समातिएका हुन् ।

चिनियाँमूलका बेल्जियमका नागरिक दावा लामो समयदेखि नेपाल बस्दै आएका थिए । तस्करीसँग दावाको पुरानो कनेक्सन भए पनि राजनीतिक व्यक्तिको छत्रछायाँमा सुरक्षित थिए । विभागले त्यसअघि पक्राउ गरेका व्यक्तिको बयान र थप लिंकलाई पछ्याउँदै जाँदा अनुसन्धान टोली दावासम्म पुगेको थियो । नेपालमा अपराधसँग दावाको कनेक्सन देखिएको पहिलो हैन । विभिन्न घटनामा उनी जोडिएका छन् । ठगीदेखि सुन तस्करीसम्म उनको कनेक्सन देखिएको छ । तर, उनी पटक-पटक प्रहरीको अपरेसनमा भने जोगिँदै आएका थिए । नेपाल प्रहरीको केन्द्रीय अनुसन्धान व्यूरो र चीनको एनसीबी बेइजिङको संयुक्त अपरेसनमा २०७६ पुस ७ गते १२२ जनालाई नियन्त्रणमा लिइएको थियो । त्यसमा पनि दावा थिए ।

*– मोतीराम तिमल्सिना, काभ्रे*

# कान समात्नुपर्नेलाई नेता कमरेड

रितेश शर्मा, झापा (हाल : मुम्बई)

संसद्भित्र कमरेडहरूका पाँचवटा जति पार्टी छन् । संसद् बाहिरका कमरेडहरूलाई झन् ठूलो दुःख छ । एउटै उद्देश्य र समान राजनीतिक दर्शनमा आधारित पार्टीहरूको केन्द्रीकरण, ध्रुवीकरण र एकता राम्रो कुरा हो । हामीजस्तो पराइभूमिमा बसेर देशप्रती माया साँच्नेहरूका लागि त झन् हर्षको कुरा हो । तर एकताको नाममा पदका लागि राजनीतिक इतिहास नै बिर्सनुचाहिँ लाजमर्दो कुरा हो । क्रान्तिकारी कम्युनिष्ट पार्टी, नेपालसम्बद्ध घटक पार्टीहरूको विगत माओवादी जनयुद्धसँग अविच्छिन्न रूपले जोडिएको छ । ०६९ असारमा प्रचण्डसँग सम्बन्धविच्छेद गरेर ड्यास माओवादी निर्माण गर्दा मोहन वैद्य किरण सर्वमान्य नेता थिए । सिपी गजुरेल, बादल, देव गुरुङ र विप्लव त्यसपछि सोपान क्रममा रहे ।

बूढाहरूको नेतृत्वमा क्रान्ति सम्पन्न हुँदैन भन्दै विप्लव बटारिएर हिँड्ने बेला पोलिटब्युरोका सदस्य धर्मेन्द्र बाँस्तोला उनलाई कन्भिन्स गर्ने भनेर गएका थिए, पछि विप्लवले उनैलाई कन्भिन्स गरे । अहिले बाँस्तोलाले पार्टी एकताको नाममा किरणपछिको स्थान दाबी गर्दै आइरहेको एउटा विज्ञप्तिमा गजुरेलभन्दा अगाडि नाम राखेकोले नै प्रष्ट पार्छ । जबकि त्यो पार्टीमा सिपी गजुरेल मात्रै हैन, रामसिंह श्रीस, परि थापाजस्ता लामो समयसम्म मुख्य नेतृत्व सम्हालेर एकता प्रक्रियापछि समाहित भएका नेताहरूको ठूलै पंक्ति क्रियाशील छ ।

सुदर्शन लामो समयसम्म प्रचण्डकै नेतृत्वमा रहेर वैद्य/विप्लवभन्दा पछि प्रचण्डबाट अलग भएका हुन् । उदयबहादुर चलाउनेबाहेक हिजो संयुक्त पार्टी हुँदा मुस्किलले जिल्ला इन्चार्जसम्म भएका देखि इलाका इन्चार्जसम्म भूमिका निर्वाह गर्नेहरू नीति निर्माण तहमा पुऱ्याइएका छन् ।

अहिले धेरै हदसम्म वैद्य र केही मात्रामा बाँस्तोलाको पार्टी कार्यकर्तालाई पार्टी एकतामा नजाने गरी प्रभावित पारेको छ । क्रान्तिकारी माओवादीभित्र अध्यनशील मानिएका अशोक शर्माहरू नयाँ जनवादी मोर्चा नामका छुट्टै संयन्त्र गठन गर्दै हिँडेका छन् । चितवन जिल्लाको पूर्वसचिव रहेका शर्मा आफूभन्दा जुनियर मान्छे बहुमतबाट ल्याएर सिनियर बनाइएको कारण विद्रोहमा उत्रिएका छन् । उनलाई मकवानपुरका पूर्वसचिव दिनेश बर्तौला, गोरखाका नेता कृष्ण कट्टेलगायतले साथ दिएका छन् । बहुमततर्फ राजकुमार तिम्सेना, पुरण राई, दलबहादुर कुमाल लगायतले पुरानो नेकपा बहुमत नै क्रियाशील रहेको जनाएका छन् । त्यही समूहका बिरु तामाङले लालबहादुर बिसीलाई चितवनको एकता अधिवेशनमा कालोमोसो दलेका थिए । पार्टी प्रतिबन्धका बेला बिसीका सहयोगी स्टाफ रहेका तामाङले भूमाफियासँग मिलेर बिसीले आफूलाई सुकुम्बासी बनाएको बताउने गर्दछन् ।

पार्टी प्रतिबन्धित रहेको बेला अकुत चन्दा उठाउनेभन्दा बढी केही काम नगरिकन हिजोका जुनियरहरू आज कसरी सिनियर भए भन्ने प्रश्न आज पूर्व क्रान्तिकारी माओवादी

**चितवन जिल्लाको पूर्वसचिव शर्मा जुनियरको कारण विद्रोहमा उत्रिएका छन् । उनलाई मकवानपुरका पूर्वसचिव दिनेश बर्तौला, गोरखाका नेता कृष्ण कट्टेलगायतले साथ दिएका छन् । बिरु तामाङले लालबहादुर बिसीलाई चितवनको एकता अधिवेशनमा कालोमोसो दलेका थिए ।**

वृत्तमा चासोको विषय बनेको छ । खुरुखुरु क्रान्तिका पक्षमा काम गर्नेहरू सधैं तल परिरहने र भड्काउमा लाग्नेहरू ठालु पल्टिरहने यो पुरानै समस्या हो ।

हिजो संयुक्त पार्टी हुँदा राज्य इन्चार्ज भएर काम गरेका नेताहरूले आज पार्टी एकताका नाममा आफ्नै मातहतका जिल्ला नेताहरूभन्दा जुनियर भएर बस्नु परेको छ । जुनियर सिनियर भन्ने कुरा क्रान्तिले उलटफेर गर्दिन सक्छ । गर्छ पनि । त्याग गर्नेले क्रान्तिका लागि भनेर गर्छन् पनि । तर कमरेड, तपाईंहरूलाई अलिकति लाज हुँदैन र ? के कारणले म सिनियर भएँ भनेर सोच्ने कि नेता भइहालें भनेर मक्खै पर्ने हो ? वर्ग संघर्ष र अन्तर्संघर्ष केमा जित्नुभो र ?

१. विचारधारात्मक हिसाबले 'एकीकृत जनक्रान्ति' को कार्यदिशा तपाईंहरू आफैंले खारेज गरेर आउनुभयो, नयाँ जनवादी क्रान्तिको कार्यदिशा नै नेपाली क्रान्तिको आधारभूत सिद्धान्त हो भन्ने कुरामा अब दुई मत रहेन ।
२. सामाजिक अन्तरविरोध फेरिएको र क्रान्तिको चालक शक्ति पनि फेरिएर सर्वहारा हैन अब मध्यम वर्ग नै मुख्य शक्ति हो भन्ने कुरा इतिहासमै पत्याउन नमिल्ने कुरा थियो । केही दिन पत्याउनुभयो कमरेड । अब त भ्रम साफ भयो होला ।
३. पार्टी विभाजनपछि क्रान्तिकारी माओवादीले राष्ट्रियता र जनजीविकाका मुद्दासँग जोडेर वर्गसंघर्षलाई आफ्नै ढंगले सञ्चालन गरिरहेको थियो । तपाईंहरूका केही गतिविधि केही समय भूमिगत ढंगले सञ्चालन भयो । थुप्रै सहादत पनि भयो । ज्यान गुमाउने ती महान् शहीद र अंग गुमाउने घाइतेहरू प्रति उच्च सम्मान छ । तर अहिले नेतृत्व गर्ने तपाईंहरू पार्टी केन्द्रीय कार्यालयका सदस्यदेखि जिल्लास्तरका नेतासम्म सिडिओ कार्यालयमा आत्मसमर्पण गर्दै पाँच हजार धरौटी बुझाएर निस्किनेहरूकै जमात ठूलो छ ।
४. बुढाको नेतृत्वमा क्रान्ति हुँदैन भन्ने उट्पट्याङ तर्कको पछाडि यसरी कुद्नुभयो, मानौं कागले कान बुच्चै पारेर लगिदिएको होस् । क्रान्तिको निम्ति क्रान्तिकारी दृढता र दृष्टिकोण पहिलो शर्त हो, उमेर दोश्रो तेस्रो चौथो कुरा हो भन्ने बिर्सिनुभयो । क्रान्तिमा विचार-राजनीति र कार्यदिशा मुख्य हुन् भन्ने कुरा जहिल्यै ख्याल राख्नुपर्छ । अन्ततः तन्नेरी छोडेर फेरि बूढाकै नेतृत्वमा आइपुग्नुभयो ।

कमरेडहरू, धेरै जुनियर क्रान्तिका दौरान वर्गसंघर्षमा आफ्नो श्रेष्ठता सावित गरेर सिनियर हुने कुरा जायज हो । तर, वर्गसंघर्ष र अन्तरसंघर्ष कतै पनि श्रेष्ठता हासिल नगरी नेता बन्नु भनेको बुँख्याचा बन्नुबाहेक केही हैन । कान समाएर उठबस गराउनुपर्ने मान्छेहरूलाई वैद्य कमरेडले नेता बनाइदिनुभएछ । क्रान्तिकारी एकता - जिन्दावाद । तपाईंहरू सबैको - भलो होस् ।

# बुद्धभद्रलाई कहिले विभूति बनाउने सरकार ?



विराट अनुपम

सन् ४०३ मा काश्मिरमा उत्तरबाट आएका चिनियाँ यात्रु फाहियान र नेपालको पारिवारिक बिरासत भएका बुद्धभद्र भेटिन्छन् । भेट एक औसत भेटको रूपमा सकिँदैन । 'मौथ्यान थोलो' गुम्बामा बुद्ध धर्मका प्रखर विद्वान् बुद्धभद्रको ज्ञानबाट फाहियान अर्थात् हु एन्साङ प्रभावित हुन्छन् । बुद्ध धर्मका पाइलाहरू खोज्दै चीनबाट गोबी मरुभूमि पार गरेर मध्य एशियाको बाटो काश्मिर आएका थिए फाहियान । उनले बुद्ध जन्मथलो लुम्बिनीदेखि अरु बुद्ध तीर्थस्थल र बौद्ध धर्मग्रन्थबारे जानकारी दिएका थिए ।

दक्षिण एशियाली यात्रा सकेर दक्षिणपूर्वी एशिया हुँदै चीन फर्कने क्रममा आफ्ना केही सहयोगी सँगै राखिदिएर फाहियानले बुद्धभद्रलाई आफ्नो देश बोलाउँछन् । अन्ततः सन् ४०६ मा बुद्धभद्र भारत, म्यानमारदेखि भियतनामी बाटो प्रयोग गरेर चीन पुग्छन् । चीनको नानचिङलाई मुख्य आधार बनाएर सन् ४०९ देखि व्यापक बौद्धधर्मको व्याख्या, प्रचार, अनुवाद गर्छन् । पालीदेखि संस्कृत सबैका जानकार बुद्धभद्रकै कारण फाहियानका निम्ति बौद्धधर्मको खोज सहज भयो । सन् ३७५ मा १६ वर्षे तन्नेरी हुँदा नै गृहस्थी छाडेर बुद्ध धर्मतिर लागेकाले मात्रै बुद्धभद्र बुद्ध धर्मको प्रख्यात व्याख्याता भएका होइनन् । उनी बुद्ध कुलकै अनुहार भएर पनि सहज भएको हुन सक्छ । उनी सिद्धार्थ गौतम बुद्धका काकाको छोरा पनि थिए । त्यसले उनको बुझाइलाई वंशज बुझाइ पनि मान्न सकिन्छ ।

फाहियान र बुद्धभद्रको बौद्धिक मित्रता र सहकार्य आजीवन चल्यो । चीनमा बसेर दुई दशक काम गरे । उनकै कामले आज चीनको बौद्धधर्म ग्रन्थका ठेली बलिया र जीवन्त भएको देखिन्छ । सन् ४२९ मा बुद्धभद्रको मृत्यु भयो । त्यसको सात वर्षअगाडि सन् ४२२ मै फाहियानको मृत्यु भइसकेको थियो । पाँचौं शताब्दीका यी दुई प्राज्ञको यो सहकार्य फगत उनीहरूको जीवनको पहिलो मात्रै थिएन । नेपाल र चीनबीच जनस्तरको प्रखर सम्बन्ध पनि पहिलो नै थियो । हिमालपारि गएर नेपालमा जन्मेका बुद्धको धर्मसम्बन्धी प्रचार, विस्तार र खोज गर्नु साँच्चै ठूलो योगदान थियो । आज पनि नेपाल र चीनबीच जनस्तरको कुरा गर्दा आउने दस्तावेज भएको प्रथम बलियो उदाहरण यही हो । सायद यही भएर हुनुपर्छ २०७६ असोजमा चिनियाँ राष्ट्रपति सि चिनफिङ नेपाल आउँदा पनि यही प्रसंग कोट्याएर दुई देशको सम्बन्ध १६ सय वर्षभन्दा पुरानो भएको बताएका थिए । नेपाल भ्रमणमा आउने अघिल्लो दिन ०७६ असोज २४ गते नेपालका अखबारमा आफ्नो हस्ताक्षरित आलेख लेख्दै सिले फाहियान र बुद्धभद्रको प्रसंग जोडेका थिए, 'चीन र नेपाल पहाड र नदीले जोडिएका छन्, युगौंयुगदेखि नै यी दुई मुलुकबीच मैत्रीपूर्ण सम्बन्ध रहँदै आएको छ। करिब १६ सय वर्षअघि चिनियाँ महान् भिक्षु फा सियान र नेपाली महान् भिक्षु बुद्धभद्रले एकअर्काको देश भ्रमण गरेका थिए र संयुक्त रूपमा बौद्ध धर्मका शास्त्रपद अनुवाद गरेका थिए ।'

सिले यो प्रसंग जोडे पनि फाहियानको तुलनामा बुद्धभद्रको धेरै चर्चा हुन्न । यसो हुनुमा बुद्धभद्रलाई नेपालका प्राज्ञिक तथा खोज अनुसन्धानको क्षेत्रमा लाग्नेदेखि सत्तामा हुनेहरूले नदेखाएको चासो हो । बुद्धभद्रलाई नेपाल-चीन जोड्ने सेतुको रूपमा मात्रै प्रयोग गरिएको छ । ठूलो बहश, खोज, अनुसन्धान, प्रबर्द्धन र सम्मान भने गरिएको छैन ।

नेपाल सरकारले बुद्धभद्रलाई शुरुमा राष्ट्रिय विभूति बनाएर ठूलो स्थान दिन सक्छ । अहिलेसम्म चीनसँग जोडिएका एक अनुहार नेपालका राष्ट्रिय विभूति छन्, तेह्रौं शताब्दीमा बेइजिङसम्म पुगेर नेपाली कला शैली फैलाउने अरनिको । महान् कलाकार अरनिको राज्यसत्तासँग जोडिएका अनुहार थिए । बुद्धभद्र भने राज्यसत्तासँग जोडिएर काम गरेका अनुहार थिएनन् । जनस्तरमा रहेर उनले धेरै राम्रो काम गरे । दुई देश जोडे । दुई संस्कृति जोडे । अझ अरनिकोभन्दा आठ शताब्दी अगाडि उनले त्यो छाप छोडेका थिए । त्यसैले सरकारले बुद्धभद्रलाई विभूति घोषणामा बिलम्ब गर्नुहुन्न । लुम्बिनी बौद्ध विश्वविद्यालयमा बुद्धभद्र अध्ययन संस्थान सञ्चालनदेखि अन्य खोज अनुसन्धानका काम गर्न सकिन्छ । सरकारले त्यसमा पहल गर्न सक्छ । नेपाल सरकारले पछिल्लो समय शेरबहादुर देउवा सरकार हुँदा जयपृथ्वीबहादुर सिंहलाई २०७९ असार ६ गते मन्त्रिपरिषद्को निर्णयबाट १८ औं विभूति बनाएको थियो । मानवतावादी दर्शनका विश्वस्तरीय अगुवादेखि नेपालका विशाल दार्शनिक, समाज सुधारक सिंहलाई भन्दा अगाडि केपी ओली सरकारले भक्ति थापालाई पनि विभूति बनायो । २०७८ असार १४ गतेको मन्त्रिपरिषदको बैठकबाट थापालाई १७ औं विभूति बनाइएको थियो । दुवै लोकप्रिय निर्णय हुँदाको सरकारमा प्रमुख घटक थियो माओवादी । अहिले माओवादीकै नेतृत्वको सरकार छ । प्रचण्डलाई बुद्धभद्रलाई नयाँ विभूति बनाउने र लोकप्रिय हुने अवसर छ ।

बुद्धभद्रलाई देशको १९ औं विभूति बनाए एकै परिवारका विभूति हुनेको संख्या पनि थपिनेछ । जनक र सीता, अनि भगवान गौतम बुद्ध र भिक्षु बुद्धभद्र । हिन्दू सभ्यताका मानक जनक र सीता अनि बुद्ध सभ्यताका मानक बुद्ध र बुद्धभद्र । यो आफैंमा सुन्दर संयोग हुनेछ । आगामी असोज ५ गते चीन भ्रमणमा पुग्ने प्रधानमन्त्री प्रचण्डलाई बुद्धभद्र विभूति घोषणाले तीन कोणमा फाइदा हुनेछ । एक, यसले बुद्धभद्रलाई नेपाली आम मानसपटलमा जोड्नेछ । दुई, यसले लुम्बिनीको पर्यटन तथा आध्यात्मिक महत्वको प्रचार गर्नेछ । तीन, चार वर्षअगाडि बुद्धभद्र सम्झिएका सिले पछिल्लो समय सार्वजनिक गरेको वैश्विक कार्यक्रम ग्लोबल सिभिलाइजेशनल इनिसिएटिभ हो । नेपाल र चीनको सिभिलाइजेशन जोड्ने सेतुको सम्मान गरेर चीन पुग्दा सिलाई सकारात्मक बनाई प्रचण्डले कूटनीतिक चातुर्यता देखाउन सक्छन् । बुद्धभद्रलाई विभूति बनाएमा सबै पक्षलाई फाइदा मात्रै छ ।

# यसरी शिला खोजेर के हुन्छ ?

तीर्थ सिग्देल

एउटा भनाइ छ, मान्छे लोभी हुन्जेलसम्म ठगहरूले ठगिरहन्छन् । लोभले लाभ, लाभले विलाप भनेजस्तै लोभी जमातले ठगको संगत गर्छ र ठगले लोभ देखाइरहन्छ । नेकपा विभाजन भएपछि तीनथरीका कम्युनिष्ट पार्टी भए । अहिले ती पार्टी कोही सत्तामा छन् त कोही सडकमा । एकमनाको सरकार सनकमा गिराएपछिको यो परिणाम आज भोगिरहेका तीनै थरी पार्टी आ-आफ्ना डम्फू बजाउन व्यस्त छन्, जनताका नाममा । त्यसमध्ये नेकपा एमाले रानो हराएको माहुरीझैं रन्थनिएको प्रतीत हुन्छ । उसले भर्खरै सिरहा पुगेर मदन भण्डारीलाई सम्झन भ्यायो । सर्रे अम्बासमा पुगेर भएभरका एमाले नेताहरूले सायद ती दिन सम्झे होलान् कि अबका बाँकी दिन ?

गिरिजाप्रसाद कोइरालाले आफ्नो जीवनका अन्तिम क्षणतिर राजा ज्ञानेन्द्रलाई लक्ष्यित गर्दै दिने गरेका धम्कीका शब्दहरू म अहिले पनि सम्झन्छु । ग्र्याण्ड डिजाइनका कुराहरू र त्यसलाई खोलिदिने धम्की । सायद गिरिजाप्रसादले ती शब्द यसै भने वा साँच्चै केही डिजाइन थियो । जेहोस्, उनका धम्कीले केही काम गऱ्यो नै होला वा अरु नै कारणहरूले ज्ञानेन्द्रले नारायणहिटी छाडे । अथवा माओवादीका बन्दुकका डरले ज्ञानेन्द्रले राजगद्दी त्यागे । यी सबै कुरा रहस्यकै गर्वमा छन् । न गिरिजाप्रसादले पोल खोल्न भ्याए, न ग्र्याण्ड डिजाइनबारे सत्य कुरा बाहिर आयो । अहिलेको सरकारको नेतृत्व गरिरहेको पार्टीले भर्खरै एउटा अभियान शुरु गरेको छ । पार्टी रुपान्तरण वा जागरणका नाममा गरिएको त्यो एकप्रकारको गाउँफर्क अभियानजस्तै नै हो । पञ्चायतले गाउँफर्क अभियान चलायो, त्यसपछि अलिअलि मिलेर नै काम गरिरहेका कांग्रेस-कम्युनिष्टहरू लखेटिए, अन्ततः पञ्चायत कमजोर बन्यो । सत्तामा रहँदा अनेक जुक्ति फुर्छन् । त्यो बेला लाग्छ, अब हामी सर्वशक्तिशाली हुनेछौं । अहिले पनि त्यही अभ्यास भइरहेको छ । एमालेले यसअघि मिशन ग्रासरुट अभियान चलायो । त्यसको परिणाम के भयो ? एमाले अझ कमजोर प्रमाणित भयो । आधाजतिले मात्र पार्टी सदस्यता नवीकरण गरेको पत्ता लाग्यो । मिशन ग्रासरुटले एमालेको रोगको डाइग्नोष्टिक त गऱ्यो तर रोग पत्ता लागे पनि यसको उपचार विधि र औषधि पत्ता लागेन । त्यही भएर ऊ यतिबेला सर्रे अम्बासतिर मन डुलाउँदै छ ।

नेकपा विभाजन भएलगत्तै मैले एउटा भविष्यवाणी गरेको थिएँ, नेपालमा उस्तै विचार र व्यवहार भएका तीन ठूला कम्युनिष्ट पार्टी टिक्दैनन् । र, अहिले पनि यो वाक्य दोहोऱ्याएर लेख्छु, अब लामो समयसम्म एमाले, माओवादी वा समाजवादी जे नाम दिए पनि तीनै वटा पार्टी अस्तित्वमा रहन सक्दैनन् । किनभने एमाले बैचारिकरुपमा स्खलित छ, उसले अझै पनि बहुदलीय जनवाद नै भनिरेहको छ तर अग्रगामी सोच अगाडि सारिरहेको छैन । माओवादी क्रान्तिको ज्वालामुखीबाट निस्केर आएको छ तर ऊ एकैचोटी खलाँतीबाट निस्केको फलामलाई पानी चाबेजस्तो भएर चिसिएको छ । नेकपा विभाजन हुँदा महत्वपूर्ण भूमिका खेल्ने र संविधानको रक्षाका लागि जेहाद छेड्ने नेकपा एकीकृत समाजवादी कुहिरोको कागजस्तो भएको छ । उसले न फेद राम्ररी समातेको छ न टुप्पो । राजनीतिमा विचार र व्यवहारको सन्तुलन मिल्यो

**आफ्नो हातमा भएको चिज गुमाएर त्यही चिज खोज्दै हिँड्नुको के अर्थ छ ? घरमा सुरक्षित राखिएको भकारीको घान छरपष्ट पारेर सोहोर्दै हिँड्नुको के मज्जा हुन्छ ?**

भने मात्र सफलता प्राप्त हुन्छ । चाहे त्यो पार्टीमा होस् वा व्यक्तिमा । एउटा कुरा पक्का हो कि अब विरासत र इतिहासले मात्र कसैको राजनीति टिक्दैन । यसो हुँदो हो भने यतिबेला भारतमा गान्धीहरूकै सत्ता हुन्थ्यो र नेपालमा कोइरालाहरूकै हालीमुहाली । दश वर्षसम्म बन्दुकको बलमा सत्ता कब्जा गर्न तम्सिएको माओवादी शान्तिपूर्ण बाटोमा न आउने थियो न २०६४ सालको विरासत जोगाउन ऊ अहिले तलतल पुग्नु पर्थ्यो । यसो हुन्थ्यो भने न एमाले दुईतिहाइको सत्ताबाट ओर्लन्थ्यो न उसले सर्रे अम्बासको खोजी गर्नुपर्ने थियो । न त सत्तामै भए पनि माओवादीले कार्यकर्ता खोज्ने अभियान चलाउनुपर्ने थियो ।

एक जना पुराना माओवादी विद्यार्थी नेता (अहिले वकिल) ले भनेको सम्झन्छु, जनता लोभीपापी भएसम्म यस्तै प्रवृत्तिले घर गरिरहन्छ । उनले शुरुको प्रसंग कोट्याउँदै भनेका थिए, मान्छे लोभी हुन्जेलसम्म ठगहरूले ठगिरहन्छन् । यसको अर्थ आजको हाम्रो राजनीतिको सिद्धान्त मान्छेहरूलाई उल्लु बनाऊँ र शासन गर भन्ने छ । उनको तर्कलाई आधार मान्ने र चर्को स्वरमा धेरैपटक एउटा कुरा भनिरहने हो भने त्यो स्थापित सत्य बन्छ । राजनीतिको यो शैली नेपालमा मात्र होइन, दक्षिण एसियामा नै चलेको छ । भारतमा मोदी र बंगलादेशमा शेख हसिनाहरूले चाहेको शासन चल्छ । पाकिस्तानको राजनीतिक उतारचढाव र श्रीलंकामा आएको आर्थिक संकट जनतालाई उल्लु बनाएर गरिने शासनशैलीको परिणाम हो ।

सत्तामा रहँदा जनता नदेख्ने र सत्ता बाहिर हुँदा दुःख देख्ने पुरानो रोग राजनीतिमा छ । र, पटकपटक चुनावको परिणामले रोगको संकेत गर्दा पनि उपचार नगर्ने हाम्रो राजनीतिको जटिलता हो । मिशन ग्रासरुटले नसुध्रिएको एमालेले चलाएको पुरानाहरूको खोजी अभियान र बिलाएका कार्यकर्ता खोज्दै गाउँ पसेको माओवादीको मनोदशा एउटै हो । आफ्नो हातमा भएको चिज गुमाएर त्यही चिज खोज्दै हिँड्नुको के अर्थ छ ? शक्ति संघर्ष र सत्ता संकटको मारमा मुलुकलाई पारेर जनताको भावनामाथि कुठाराघात गर्दै दुईतिहाइको सरकार टिकाउन नसकेर फेरि जनतामा जानु एउटा बहाना मात्र हो । आफ्नो घरमा सुरक्षित रुपमा राखिएको भकारीको घान छरपष्ट पारेर सोहोर्दै हिँड्नुको के मज्जा हुन्छ ?

आजको राजनीतिको क्रिडाले जनतालाई सताउँदै लगेको छ किनभने आफ्नो सत्ता र विरासत जोगाउने चिन्ताले नेपाली राजनीतिज्ञहरूलाई जति चिन्ता छ, त्यो भन्दा बढ्ता जनतालाई नानीहरूको फिस तिर्न नपाएको र आफ्नी आमाको उपचारको छ । तसर्थ, चाहे त्यो एमालेले चलाएको मिशन ग्रासरुट होस् र त्यस वरपरबाट ल्याइएका सर्रे अम्बास र अरु त्यस्तै ठाउँको खोजी र इतिहासतिर फर्कने प्रयास भकारी फुटाएर धान सोरेजस्तो मात्र हो । त्यस्तै, माओवादीले जनतासँग जोड्ने नाममा चलाएको अभियान त झन् कुन्युमा आगो लगाएर धानको शिला खोजेजस्तो हो । किनभने फुटेको भकारी र खोजेको शिलाले न बोरा भरिन्छ, न वर्षभरि खान पुग्छ । यसरी बेलाबेला चलाउने अभियान वा मिशन त केवल कार्यकर्ता इन्गेज गराउने सोचहरू मात्र हुन् । र, सत्ताको भोक वा विरासतले भत्भती पोलेर वर्तमानमा चल्मलाउने प्रयास मात्र हुन् । यसरी चालिएका कदमले न एमालेलाई अब सत्तामा फर्काउनेछ न माओवादीलाई । न कांग्रेसलाई युवासँग जोड्नेछ न समाजवादी केन्द्रलाई ।

# मन्त्रीभन्दा पीए जान्ने, कसको आदेश मान्ने ?

अधिकार पाइएन भन्दै राज्यमन्त्री रुन्छन्, पर्याप्त अधिकार भएका मन्त्रीलाई भने स्वकीयहरूले फनफनी घुमाउँछन् । गतिलो राजनीतिक पृष्ठभूमि नभएका र काकताली परेर सिंहदरबार छिरेका रञ्जिता श्रेष्ठ, अनिता साहदेखि सीता गुरुङसम्म अहिले क्याबिनेट मन्त्री छन् । न त विषयवस्तुबारे पर्याप्त ज्ञान, उठाइएका टिप्पणी फाइल महिनौंसम्म सदर । बदनाम सहकारीलाई कालोसूचीमा राख्न उठाइएको टिप्पणी दुई महिनासम्म 'होल्ड' मा राख्ने उनै मन्त्रीले सचिवालयका कर्मचारीलाई अगाडि सार्दै कर्मचारी खटनपटनदेखि अनेक कुरामा हस्तक्षेप गरेको भूमिव्यवस्था सहकारी तथा गरिबी निवारण मन्त्रालयका कर्मचारीको दुखेसो छ । सरोज बुढाथोकीलाई रेशम चौधरीको मुद्दाको फाइल बोकेर सहयोग गरेवापत मन्त्री रञ्जिता श्रेष्ठको सचिवालयमा भित्र्याइएको छ । यस्तै निजी सचिवको जिम्मेवारीसहित उपसचिव बसन्त पुरी र रणबहादुर चौधरीले मन्त्री रञ्जितालाई सघाइरहेका छन् । तर उनै बुढाथोकीका अनावश्यक हस्तक्षेपका कारण भूमिका कर्मचारी आजित छन् । कतिसम्म भने, असोजमा हुने कर्मचारीको नियमित सरुवा, आजै अहिल्यै गर भनेर कर्मचारीलाई दबाब दिने गरेको त्यहाँका कर्मचारीले बताएका छन् । बुढाथोकीले स्टोर, खरिदार, सुब्बामात्र होइन कि सहसचिवकै सरुवामा समेत चलखेल गर्ने गरेको पछिल्लो प्रमाण हो, नापी विभागका हाकिम जनकराज जोशीको सरुवा । यही सूचीमा छन्, भूमि व्यवस्थापन विभागका सहसचिव पद्मनिधि सोती । नापी विभागबाट ८ महिनामै दाइ जनकलाई हटाएर यसअघि एक कार्यकाल महानिर्देशक चलाइसकेका प्रकाश जोशीलाई खटाइसकिएको छ । मन्त्रालयको यो खटनपटनले १३ दिने दाजुभाइबीच दुश्मनीको पारो बढेको छ ।

जनकराजले त्यहाँ रहँदा १५ बुँदे मापदण्ड बनाएर लामो समयदेखि उपत्यकामा बसिरहेका कर्मचारीलाई दुर्गम र दुर्गममा कार्यरतलाई सुगममा तान्ने तयारी गरिरहेका थिए । यसरी मापदण्डअनुसार सरुवा हुँदा कलंकी मालपोत, डिल्लीबजार, ललितपुरदेखि तराईका रैथाने अधिकृतहरू सरुवामा पर्ने भए । सुनसरी र मोरङ, झापा, सप्तरी, मोरङ, जनकपुर नापीमा सबैभन्दा बढी भद्रगोल छ । एउटै अधिकृत, सर्वेक्षक १२ वर्षदेखि रजगज जमाएर बसेका छन्- सुनिल कर्ण । कलंकी जनकराज ओझा तीन वर्षदेखि कार्यरत छन् । यस्तै दिलीप सिंह पनि लामो समयदेखि सोही कार्यालयमा छन् । ललितपुरमा विजय सिंह, मोहन बञ्जाडे, पुरुषोत्तम नगरकोटी लगायत छन् । यस्तै भक्तपुरमा एउटै अधिकृत ४ वर्षभन्दा बढी समयदेखि छन् ।

**मन्त्रीका पिएकै पिए**

उता सीता गुरुङले सम्हालेको शहरी विकास मन्त्रालयमा अर्को गाईजात्रा छ । त्यहाँ स्वकीय हेमन्त गुरुङ छन् तर हेमन्तले पदीय हैसियतको दुरूपयोग गर्दै आफ्नो पिए नियुक्त गरेका छन्- आकाश उप्रेतीलाई, घर खैरहनी चितवन । मन्त्रीका स्वकीयहरूलाई गाडी सुविधा हुँदैन तर हेमन्तलाई मन्त्रालयले बा २ झ २६३५ नम्बरको क्रेटा गाडी उपलव्ध गराइएको छ । हेमन्त अनामनगर बस्छन् भने उप्रेती सातदोबाटो । सहसचिवसरह हेमन्तले मासिक १ सय लिटर इन्धन सुविधा लिँदै आएका छन् । पिए उप्रेतीलाई ओसारपसार गर्न इन्धन अपुग भएपछि गुरुङकै निर्देशनमा विभाग, बाग्मती सभ्यता एवं आयोजनाबाट थप ३ सय लिटर मासिक इन्धन खपत हुँदै आएको छ । यसका अलावा उनै पिए गुरुङका समेत पिएलाई चितवन आउजाउ गर्नका लागि विभिन्न आयोजनाबाट सवारी साधन उपलव्ध गराइँदै आएको छ । उप्रेतीले मन्त्रालय र मातहतबाट हुने सबै कन्सलटेन्सीको काम आफैं गर्न भन्दै बिचौलिया प्रयोग गरेका छन् ।

उता, सामान्य प्रशासनमन्त्री अनिता साहले कांग्रेसका स्थानीय सभापतिलाई ल्याएर राखेकी छन् । कृष्ण सिटौला मन्त्री हुँदा विवादमा परेका बुद्धि न्यौपानेलाई मन्त्री साहले अवैतनिक सल्लाहकारमा नियुक्ति दिएकी हुन् । न्यौपाने ०६४ को अन्तरिम सरकारका गृहमन्त्री कृष्णप्रसाद सिटौलाका स्वकीय सचिव थिए । विवादमा परेपछि हटाइए । बुद्धिलाई भदौ ३ गते नै नियुक्तिपत्र थमाइएको छ । उनैका लागि मन्त्रीले सामान्य प्रशासनसँग ब्राण्डेड आइफोन र ल्यापटप माग गरेकी छन् । कतिपयले न्यौपाने प्रहरीको भगौडा हवल्दार भएको बताउने गरेका छन् । अहिले उनै न्यौपानेले मन्त्रालयको ढोका थुनेर कर्मचारी सरुवाको काम गरिरहेको सामान्य प्रशासन स्रोतले जनाएको छ ।

# सेनापतिको मनोमानीविरुद्ध गुहारियो सर्वोच्च

प्रधानसेनापतिहरूले सैनिक ऐनको विद्यमान व्यवस्था विपरीत मनपरि गरेको, सरकारलाई ढाँटेको र आफ्नै तरिकाले सैनिक अदालत गठनमार्फत अफिसरहरूमाथि कारबाही गरेको आरोप लगाउँदै परेको रिट सर्वोच्चले पहिले दरपिठ र पछि दर्ता गरेको छ । आजभन्दा झण्डै तीन दशकअघि तत्कालीन प्रधानसेनापतिको मनमौजी आदेशबाट गठित सैनिक अदालतको कारबाहीका कारण अमेरिका भास्सिएका एक जना पूर्व सैन्य अधिकृतले गत साता दायर गर्न लागेको रिटमाथि सर्वोच्चले कारण देखाऊ आदेश जारी नगर्दै कर्मचारीतन्त्रबाटै दरपिठ भएको थियो । ०५३ सालमा भैरवनाथ गणको मेजर छँदा ट्याण्डोम प्यारा जम्प गरेवापत सेवाबाट हटाइएका प्रज्ज्वल बस्नेतलाई दुई जना भएर जम्प गरेको र उक्त कार्य नेपालमा पहिलो पटक भएको भन्दै कारबाहीस्वरूप थुनिएको थियो ।

त्यसपछि २०५८ मा सर्वोच्चबाट बस्नेतले मुद्दा जिते । र, राजीनामा दिएर अमेरिका गए । अदालतमा मुद्दा विचाराधीन हुँदाको पाँच वर्षबीच कानुन पढेर वकिल बने । त्यसपछि अमेरिकामा ल प्राक्टिस गर्दै नेपाली सेनाभित्रका हरेक गतिविधिलाई सुक्ष्म ढंगले नियाल्न थाले । उनले नेपाल आर्मीमा चार थरी अदालत हुने तर ती सबैलाई एउटै प्रकृतिको घानमा हालेर आफ्नो अनुकूलको सैनिक टीममार्फत प्रधानसेनापतिले रिस साँध्ने गरिएको जिकिर लिएका छन् । सैनिक ऐनअनुसार समरी जनरल सैनिक अदालत र जनरल सैनिक अदालत सामान्यतयाः अधिकृतहरूको हकमा लागू हुन्छ । डिष्ट्रिक्ट सैनिक अदालत र समरी सैनिक अदालतले जवानदेखि पदिकहरूसम्मलाई हेर्छ ।

तर, जनरल सैनिक अदालत र समरी जनरल अदालतवीच आकाश-जमिनको भिन्नता रहेको बस्नेतको व्याख्या छ । उनका अनुसार, नेपाल सरकारको अख्तियारीमाथि केही पनि गर्न नपाइने गरेर जनरल सैनिक अदालत गठन हुने गरेको छ । तर कुनै अदालत स्थान विशेषले टाढा छ अथवा विदेशस्थित शान्ति सेनामा कार्यरत रहेकै बेला अदालत बस्नुपरेमा नेपाल सरकार त्यहाँ जान सक्दैन । सरकारले त्यस्तो अवस्थाको मुद्दा हेर्ने अधिकार आर्मी चिफलाई दिएको अवस्थामा त्यसलाई समरी जनरल अदालत भनिन्छ ।

चिफले पनि आफू त्यहाँ जान नसक्ने हुँदा क्रमशः आफूभन्दा तल्लो तह हुँदै लेफ्टिनेन्ट कर्णेलसम्मलाई अख्तियार दिएर अदालत गठन गरिएको हुन्छ । तर सैनिक हेडक्वार्टर भएको सहज ठाउँमा आर्मी चिफले सधैं समरी जनरल अदालत गठन गर्न पाउँदैन भन्दै मुद्दामा जिकिर लिइएको छ । बस्नेतको मुद्दासँग जोड्दै एक जना भूपूकर्णेल भन्छन्, 'छत्रमान गुरुङले किरण बज्राचार्यलाई, गौरवसमशेरले प्रेमप्रकाश थापामगर लाई गरेको कारबाही त्यही श्रृंखलाभित्रको हो । जहिले पनि चिफको हातमा आगामी चिफको भविष्य निर्भर हुने भएकाले एकताका गौरवले राजेन्द्र क्षेत्रीमार्फत कोर्ट अफ इन्क्वायरी गराए भने उनका दाइ रमिन्द्र क्षेत्रीलाई कोर्टमार्शलको जिम्मा दिए । सेनामा इन्क्वायरी एउटाले र, कोर्टमार्शल अर्कोले गर्ने प्रचलन छ । यसरी त्यतिबेला प्रेमप्रकाशविरुद्ध प्रतिशोध साँधियो । राजेन्द्र क्षेत्री उठ्भन्दा उठ्ने र बस् भन्दा बस्ने भएपछि त्यसो गरिएको हो ।'

त्यसपछि पूर्णचन्द्र थापाले बलदेव महत र हेमन्त कुँवरपछिका छ जनाको जागिर खाइदिए । महत र कुँवरचाहिँ आफ्नै साथी भएकाले केही गरेनन् । तर अनुज बस्नेत, विनोद बस्नेत, शेखर बस्नेत र देव सुवेदीलाई घर पठाइदिए । सुवेदी वर्तमान प्रधानसेनापति प्रभुराम शर्माका सम्धी हुन् । त्यतिबेला उनीहरूलाई घर बसाएर शरद गिरीलाई लेफ्टिनेन्ट जनरल बनाइएको थियो । त्यसपछि कोर्ट अफ इन्क्वायरी गराइयो । जुनबेला प्रभुराम शर्मा मेजर जनरल थिए । शर्माले पनि चिफले भनेको सबै मानेकै थिए । पछि उनी प्रधानसेनापति हुने लाइनमा सजिलैसँग परेको त्यही कारणले हो । सच्चित समशेर र भरतकेशर सिंह, रुक्मांगद कटवाल र कुलबहादुर खड्का, प्रज्वल समशेर र छत्रविक्रम शाह, धर्मपालवरसिंह थापा र कृष्णनारायणसिंह थापा, गौरवसमशेर र नेपालभूषण चन्द-चीफ र सेकेण्डम्यानबीचको द्वन्द्व र एकको इच्छामा दुईको ल्याप्चे भावी उत्तराधिकार छानिने प्रमुख योग्यता हो भन्ने कुराका भुक्तभोगी सदिपबहादुर शाह, ईश्वर हमाल छँदै छन् । प्रभुरामपछि चिफको लाइनमा रहेका अशोक सिग्देल र ताराध्वज पाण्डेले पनि उनको कुरो सुन्नुको विकल्प छैन । शर्मा स्वयंलाई लेफ्टिनेन्ट जनरल दिने बेला प्रेम शाही, रघु भण्डारी, अनन्त कार्कीले गरेको विरोधको नतिजा छर्लंगै छ ।

त्यतिबेला शाहीलगायतले भनेका थिए, 'बाहुनलाई चिफ बनाउन हुँदैन । बाहुन जातैले काँतर हुन्छ ।' अहिले शाही ताराध्वज नेतृत्वको ५ सदस्यीय सैनिक जत्थाबाट त्यस्तै कारबाहीमा परिसकेका छन् । सैनिक प्रचलनअनुसार प्रधानसेनापतिले अख्तियार दिएको अधिकृतले मात्र समरी जनरल सैनिक अदालत बोलाउन सक्छन् जसले चिफको इच्छाबेगर केही गर्नै सक्दैन । अनि यसको फैसला सेनापतिले सदर गरेपछि रक्षाको पनि दाल गल्दैन । जंगी अड्डाभित्र जनरल सैनिक अदालत गठन गर्नुपर्नेमा कानुनविपरीत समरी जनरल सैनिक अदालत गठन गरिँदै आएकाले त्यो मुद्दा सर्वोच्चमा पुगेको हो । यो कार्य प्रधानसेनापतिले अधिकार क्षेत्र नाघेर गरेको बस्नेतको जिकिर छ । भनिन्छ, 'त्यसो हुँदा चिफको मनमौजी बढ्यो । पछिल्लो पटक उपरथी शाही, महासेनानी महेन्द्रजंग शाह र प्रमुख सेनानी कुलदीप तिमिल्सिनामाथिको प्रतिशोध त्यसैको ज्वलन्त नमुना हो ।'



## विश्वको सेरोफेरो

राजेन्द्र स्थापित

# कान्छी आमाद्वारा सताइएकी माओपुत्रीको दुखद कथा

सन्दर्भ : सेप्टेम्बर ९, माओको पुण्यतिथि

अध्यक्ष माओका चार पत्नी थिए। पहिलो पत्नी लुओ यिसिउबाट कुनै सन्तान भएनन्। दोस्री पत्नी याङ काइहुइ तीन छोरा माओ आन्यिङ, माओ आन्छिङ र माओ आन्लोङको आमा बनिन्। जेठो छोरो आन्यिङको मृत्यु त कोरियाली युद्धभूमिमै सन् १९५० मा भयो। माइलो छोरा आन्छिङ मानसिक रोगी थिए अनि कान्छा आन्लोङको मृत्यु ४ वर्षको उमेरमै भयो। तेस्री पत्नी ह छिछेनबाट ३ छोरी र ३ छोरा जन्मिए। जेठी छोरी माओ जिन्ह्वा, जसलाई माओ र हले लङ मार्चमा सम्मिलित हुनु परेको कारण एउटा किसान परिवारको जिम्मा लगाएका थिए। याङ परिवारमा हुर्केकै कारण उनको नाउँ पछि याङ युइह्वा रहन पुग्यो। याङले आफ्नो जीवनमा आमाबुबालाई कहिल्यै भेट्न पाइनन्। हका अरु दुई सन्तान पनि त्यसैगरी फरक फरक किसान परिवारलाई जिम्मा दिइएको थियो। अर्की पत्नी थिइन्- चियाङ चिङ। उनको तर्फबाट एउटी छोरी जन्मिइन् - लि ना। चियाङ माओकी चौथी पत्नी हुन् भने माओ पनि चियाङको चौथो पति थिए। चियाङले सन् १९३८ मा माओसित बिहे गर्नुअघि सन् १९३१ मा पेइ मिङ्लुन, १९३२ मा यु खिवेइ र सन् १९३६ मा ताङ नासित बिहे गरिसकेकी थिइन्।

माओ जियाओजियाओ माओकी तेश्री पत्नी छिछेनतर्फकी पुत्री हुन्। माओ जियाओलाई धेरै मन पराउँथे। जियाओ जब माध्यमिक स्कूलमा भर्ना हुने उमेरमा पुगिन् माओले नयाँ नाउँ राखिदिए- लि मिन। माओका सबै छोराको नाउँ 'माओ' बाटै शुरु भएको छ तर जियाओको नयाँ नाउँ अगाडि 'माओ' नराखी 'लि' राखियो। यसो गर्नुको कारण क्रान्तिकालमा आफ्नो नाउँ फेर्ने बाध्यता हो तर उनलाई सबैभन्दा मन पर्ने नाउँ थियो- लि देसेन। यो नाउँ उनले कोमिन्ताङसित संघर्षको क्रममा सन् १९४७ मा राखेका थिए। लि मिनले स्नातक उत्तीर्ण गरेपछि बेइजिङको साधारण विश्वविद्यालयमा रसायन शास्त्र पढिन्। त्यहीँ उनको भेट सन् १९५९ मा कोङ लिङह्वासित भयो। सोही वर्ष उनीहरूले बिहे गरे। सन् १९६६ मा सर्वहारा सांस्कृतिक क्रान्ति शुरु भयो। दक्षिणपन्थीहरूविरुद्ध अभियान चलाउने क्रममा माओले 'बुर्जुवाहरूको हेडक्वार्टरमा बम खसाल' अंकित पोष्टर टाँस्न लगाए। जियाओले पनि समाचारपत्रमार्फत यो कुरो थाहा पाइन्। अरु जस्तै उनी पनि उक्त पोष्टरले भन्न खोजेको के हो ? भन्नेमा अनभिज्ञ थिइन्। एकदिन आफू कार्यरत रक्षा मन्त्रालयअन्तर्गतको विज्ञान र प्रविधि इन्स्टिच्युटका विरोधी समूहसित यसबारे कुरा गरिन् र भनिन् 'हरेक व्यक्तिको आफ्नो विचार हुन्छ। बिना तर्क विद्रोही बन्नु निरर्थक छ।'

यही खरो अभिव्यक्ति उनको लागि अभिशाप बन्यो। लगत्तै विद्रोहीको शिकार बन्न थालिन्। उनीविरुद्ध 'लाल सेना' ले संघर्ष शुरु गऱ्यो। उनी ५ महिनादेखि परिवारबाट छुट्टिएर एउटा कोठामा बसिरहेकी थिइन्। ठीक त्यसैबेला क्रान्तिको नेतृत्व गरिरहेकी माओकी कान्छी पत्नी चियाङ चिङका आज्ञाकारी हान आइजिङले चियाङलाई 'जियाओ तपाईंकी छोरी होइनन्। माओले परित्याग गरिसकेकी पत्नीकी छोरी हुन्। यिनको लोग्ने विरोधीका एजेन्ट हुन्, टाइम बम हुन्। यिनीहरूलाई यहाँबाट खेद्नुपर्छ' भनेर उक्साउनसम्म उक्साए। हान र उनका साथीहरूले जियाओ कार्यरत इन्स्टिच्युटका उपनिर्देशक झाङ चिपिङविरुद्ध पनि संघर्ष छेडे। जियाओ दम्पतीले प्रसिद्ध र ऐतिहासिक लङ मार्चका एक जना नायकविरुद्ध सञ्चालित उक्त अभियानबाट सबै क्रान्तिकारीको अपमान भएको महसुस गऱ्यो। उनीहरूले अध्यक्ष माओलाई भेटेर त्यस्तो कार्य रोकाउन अनुरोध गर्ने निश्चय गरे। तर, धेरै पटक प्रयास गर्दा पनि भेट्न सकेनन्। एकदिन जियाओ जबर्जस्ती बाबुको कोठामा प्रवेश गरिन्। कुरा थाल्न नपाउँदै चियाङले जियाओलाई 'सानी महारानी, बाहिर आन्दोलन चल्दै छ, तिमी किन आयौ ? परिस्थितिको सही विश्लेषण गर्न सिक' भनिन्।

बोल्नै नपाई झपारेको सुनेर माओ रिसाए। उठेर ढोकानिर पुगे र छोरीलाई भित्र आउन संकेत गरे। चियाङतिर हेर्दै भने, 'रानी महारानीको कुरो गर भनेर कसले भन्यो तिमीलाई ? ऊ यहाँ आउदैमा के बिग्रियो ? छुच्चो बोली नबोल।' यति भनेर छोरीको पाखुरा समाती भित्र लगे र छोरीको कुरो ध्यान दिएर सुने। सांस्कृतिक क्रान्तिको नाउँमा सानो-ठूलो अप्रिय घटना र ज्यादती भइरहेको थाहा पाए। झाङमाथि गरिएको दुर्व्यवहार सुनेर भने, 'उनी एकजना असल कमरेड हुन्। क्रान्तिमा होमिएर आन्दोलनको नेतृत्व गरेका व्यक्ति हुन्।'

जियाओसँगको भेटपछि उनीप्रतिको पार्टी दृष्टिकोण माओले प्रष्ट्याए र झाङको जीवन सुरक्षित भयो। सन् १९७४ आइपुग्दानपुग्दै माओको स्वास्थ्य निकै कमजोर भइसकेको थियो। र, राजकीय शक्तिमा पकड पनि कमजोर हुँदै थियो। कतिपय घटनाप्रति आँखा चिम्लिदिए। माओको यो कमजोरीबाट लाभ उठाउँदै चियाङ र उनको मित्रमण्डलीले माओ त्सेतुङ विचारधाराविपरीत धेरै कार्य गरे। जियाओले माओलाई भेटेर यो कुरो बताउन चाहिन् तर उनलाई भेट्नै दिइएन। कहिले व्यस्त हुनुहुन्छ भन्ने कहिले के। एकदिन सुरक्षाकर्मीसँग झगडा नै गरिन्। आन्दोलनको नाउँमा आफ्नै बाबुसँग भेट्न नदिएकोमा रोष प्रकट गरिन्। जियाओले माओसँग भेट्न नसक्नुको प्रमुख कारण चियाङ थिइन्। बाहिर भइरहेका गतिविधि माओले थाहा नपाउन् भन्ने उनको चाहना हुन्थ्यो।

सन् १९७६ मा जियाओ र उनका पति कोङ कार्यालयमा थिए। माओ सिकिस्त बिरामी परेको खबर टेलिफोनबाट पाएर रुँदै बेइजिङ पुगिन्। घर पुग्दा बाहिरै सानीआमा चियाङसित जम्काभेट भयो। उनले 'आकस्मिक उपचारपछि उहाँको स्वास्थ्य राम्रो भएको छ। तिमी फर्के हुन्छ' भनिन्। जियाओ उनको कुरो मान्न तयार भइनन्। आएको बेला केही दिन बाबुसंग बसेर जाने जिद्दी गर्न थालिन्। चियाङले 'ल बस्न त बस तर बुबाको स्वास्थ्यमा तलमाथि भयो भने त्यसको सम्पूर्ण जिम्मेवारी तिमीले बोक्नुपर्नेछ र यस्तै ढिपी गर्न थाल्यौ भने आइन्दा यहाँ प्रवेश पाउने छैनौ' भनिन्। जियाओ पनि उत्तेजित बनिन् र चिच्याइन्, 'आफ्नो बुबालाई भेट्न मलाई तपाईंको अनुमति चाहिने ?'

आमा-छोरीको बहस चर्कन थालेपछि त्यहीँ मूक दर्शक भई उभिइरहेका माओपछिका वरिष्ठ नेताहरू ह्वा कोफेङ र वाङ दोङसिङलाई अनिष्ट हुन लागेको भान भयो। उनीहरू जियाओ नजिक पुगेर उनलाई घर फर्कन आग्रह गर्न थाले। पार्टीका सिनियर कमरेडहरूको आग्रहपछि उनी घर फर्किइन्। एकदिन चिनियाँ कम्युनिष्ट पार्टीको वर्गीकृत सूचनामा माओ अत्यन्त सिकिस्त अवस्थामा पुगेको खबर पढिन् र हान्निएर फेरि बेइजिङ पुगिन्। बाबुसँग भेट्ने अनुमति मागिन्। यसपटक भने बिना अवरोध र गलफत्ती उनलाई भित्र छिर्न दिइयो। कोठाभित्र पुगेर सिधै माओ पल्टिरहेको बिछ्यौनातिर पुगिन्। माओ इन्तु न चिन्तु भएर सुतिरहेका थिए। अनुहार पहेंलो भइसकेको थियो भने स्वर भासिएको। यसको बाबजुद दिमाग भने चुस्तै थियो। चियाङको पछिपछि जियाओलाई देखेर मायालु लवजमा 'छोरी, मलाई हेर्न आयौ ?' भनेर सोधे। बुबाको अवस्था देखेर रुन मात्र नसकिरहेकी जियाओले टाउको हल्लाएर 'हो' भन्ने उत्तर दिइन्। माओले फेरि सोधे 'बेलाबेलामा तिमी मलाई भेट्न किन आउँदैनौ ?'

चियाङ पनि सँगै उभिइरहेकोले जियाओले साँचो कुरो गर्न उचित ठानिनन्। मौन बसिन्।

माओले फेरि सोधे, 'तिमी अब कति वर्षको भयौ ?'

उनान्चालिस - जियाओले उत्तर दिइन्।

अठ्तिस हैन ? - माओको पुनः सोधाइ।

बुबाको कुरोबाट जियाओका आँखा आँशुले भरिए। आफूलाई सम्हाल्न खोजिन्। तैपनि, दुईथोपा आँसु गालामा बग्यो। माओले सकिनसकी हात उचाले। जियाओको बूढीऔंला समातेर हत्केलामा औंलाले गोलाकार चिह्न कोरे तर जियाओले बुबाको संकेत बुझिनन्। आफूलाई सम्हाल्नै सकिनन्। मुटु फुट्लाझैं भयो। बाबुको हात छुटाएर कोठाबाट बाहिरिइन्। उनलाई बुबाले गरेको संकेतबारे ठूलो कौतुहलता जाग्यो। बूढापाकाहरूसँग बसेर सल्लाह गरिन् तर कसैले पनि ठ्याकै यही हो भनी बताउन सकेनन्। उनीहरूको अनुमानमा माओले आफ्नी पत्नी तथा जियाओकी आमा ह छिछेनबारे सोधेको हुनुपर्छ। उनीहरूका अनुसार नाउँको पहिलो अक्षरले हतर्फ नै संकेत गर्छ। यसको दुई दिनपछि जियाओ कोठामा बसिरहेकी थिइन्। चिनियाँ कम्युनिष्ट पार्टीको केन्द्रीय कार्यालयले एउटा जीप पठायो। जियाओ त्यसैमा बसेर माओको निवास पुगिन्। उनी पुगेलगत्तै माओको स्वासप्रश्वास बन्द भयो। यो सन् १९७६ सेप्टेम्बर ९ को दिन थियो। निधनपश्चात माओको शव तियानमेन स्क्वायरस्थित ग्रेटहलमा राखियो- अन्तिम दर्शनको लागि। जियाओले बुबाको शवको पछाडि बस्न चाहिन् तर चियाङले यसमा आपत्ति जनाइन्। बिचरा जियाओ सर्वसाधारणसरह लाममा बसिन्, टाउको निहुऱ्याएर। बाबुको अन्तिम दर्शन गर्न।

## कमरेड छिञ्चुको रातारात कायापलट

१० वर्ष लामो छापामार युद्ध लडेर राजनीतिको मूलधारमा आए पनि माओवादीका कतिपय नेताको द्रव्यमोहले पार्टीलाई नै धरासयी बनाउनेतर्फ डोऱ्याइरहेको बुझ्न थालिएको छ। यो प्रवृत्तिको रोग स्थानीय तहदेखि केन्द्रसम्म सल्बलाइरहेको पाइन्छ। यस्तै, आर्थिक मुद्दामा डोबिएका छन् माओवादी केन्द्र बागमती प्रदेशका उपाध्यक्ष प्रेमबहादुर पुलामी, छिञ्चु चिनिने पुलामी मकवानपुर १ (क) बाट विजयी सांसद हुन्। यो द्रव्यमोहमा उनकै खल्ती गह्रुँगो भएको छ वा छैन, त्यो भने पुष्टि हुन बाँकी छ तर हेटौंडा उपमहानगरपालिका-६, रामनगर निवासी रामबहादुर कार्कीको परिवारलाई घर न घाटको बनाउने कार्यमा उनको प्रत्यक्ष भूमिका खुल्न आएको कागज पत्र हामीलाई प्राप्त भएको छ।

**यस्तो छ प्रकरण**

रामबहादुर कार्की पेशाले शिक्षक हुन्। छोरा पुजनले हेटौंडा बजारमा भ्वाइस मार्ट नामक इलेक्ट्रोनिक व्यवसाय गर्दै आएका थिए। पुजनको व्यावसायिक आय आर्जन राम्रो थियो। यता, हुन्डाइ मोटरको शोरुम सञ्चालक थिए विजय श्रेष्ठ। विजयका अर्का साथी प्रकाश राजवाहक। घर काठमाडौंमा भए पनि कारोबार बिग्रेका कारण प्रकाशले हेटौंडातिरै जीविका गर्दै आएका रहेछन्। साँढुदाइ प्रेमबहादुर पुलामी छिञ्चुको छत्रछायाँमा रहेका कारण प्रकाशको चहलपहल बढ्दै गएको थियो।

प्रकाश राजवाहक र विजय श्रेष्ठले पैसावाल कारोबारी देखिएका युवा पुजन कार्कीलाई विभिन्न लोभलालच देखाएर आफ्नो बशमा लिने योजना बन्छ। हुन्डाइको पार्टनर बन्न्न प्रस्ताव गर्छन्। उनीहरूले ट्रिपर भित्र्याउने एजेन्टको काम गर्ने गरेको पुजनलाई सुनाउँछन्। एउटा टिपरबाट २५/३० लाख कमिसन आउने बताउँदै भन्सारमा रोकिएका टिपर छुटाउन तत्काल बजेट आवश्यक परेकाले पार्टनर बन्न आग्रह गर्दै हुन्डाइ कम्पनीको हेटौंडा डिलरमा पुजनलाई इन गराउने नाटक गरिन्छ। पुजन विश्वासमा पर्छन् र आफ्नो भइरहेको व्यवसाय भ्वाइस मार्टको पैसा सबै प्रकाश र विजयको पोल्टामा हालिदिन्छन्। आफ्नो घर जग्गा धितो राखेर ऋण निकालेको पैसासमेत प्रकाश राजवाहक र विजय श्रेठलाई सुम्पिन्छन्। पैसाजति सुम्पिएका पुजन त्यतिखेर फस्किन्छन् जतिखेर उनको भागमा न टिपरको कमिसन हाता लाग्छ न हुन्डाइ कम्पनीको शेयर नै आउँछ। करिब एक महिनाभित्र प्रकाश राजवाहक र विजय श्रेष्ठको गलत नियत थाहा पाएका हुन्छन्। थाहा पाउँदासम्म आफ्नो लगानी चटनी बनिसकेको हुन्छ। विजय र प्रकाशसमेतले पुजनको पैसा व्यावसायिक लगानी



३. लाल बहादुर [illegible] छोरी, प्रेम बहादुर पुलामीकी पत्नी, बागमती प्रदेश, जिल्ला मकवानपुर, फापरबारी गा.वि.स. वडा नं. १ की हाल परिवर्तित बागमती [illegible] वडा नं ६ बस्ने वर्ष ३९ की प्रमिला [illegible] (पुलामी) (ना.प्र.नं. [illegible] मिति [illegible] जि.प्र.का. मकवानपुर। ...१

नै नगरी बाँडीचुँडी खाइवरी मोज गरेका हुन्छन्। योजनाकार मानिएका मुख्य पात्रमध्ये विजय श्रेष्ठले चलाखीपूर्वक आफ्नो नाम छायामा राखे पनि प्रकाश राजवाहकले जिल्ला प्रहरी कार्यालय हेटौंडा थुनामा रहँदा दिएको हिसाब टिपोटअनुसार विजयले २ करोड ४० लाख मासेको देखिने पुजन कार्कीले हामीलाई बताएका छन्। त्यसबाहेक पुजनले आफ्नै खाताबट ८१ लाख रूपैयाँ विजयको खातामा हालेको सप्रमाण दाबी पेश गरेका छन्।

**नेता र प्रहरीले डुबाए : पीडित परिवार**

बल्ल शुरु भो नेता र प्रहरीको खेल। घर जग्गा व्यवसाय सबै बन्धकी राखेर पुजन कार्कीले दिएको पैसा असुल्न अब एउटै भरोसाको बाटो थियो कानुनको सहायता। आफ्नो सर्वस्व गुमाएका कार्की परिवारले जिल्ला प्रहरी कार्यालय मकवानपुर हेटौंडामा प्रकाश राजवाहक विरुद्ध बैंकिङ कसुर चेक अनादरमा मुद्दा दिए। प्रकाश पक्राउ परे। प्रकाश पक्राउ परेपछि उनका साँढुदाइ प्रेमबहादुर पुलामी, श्रीमती सबि सिन्तान, श्रीमतीकी दिदी प्रमिला पुलामी प्रकाश राजवाहकको बचाउमा सक्रिय रहे। अन्ततः चेक लेनदेन गर्ने र कागज गर्ने सहमति गराउन माननीय प्रेमबहादुर पुलामी सफल देखिए। जिल्ला प्रहरी कार्यालय मकवानपुरका उपरीक्षक वामदेव गौतम र सांसद पुलामीको अगाडि पीडितले घुँडा टेक्न बाध्य भए।

**सम्झौता कागज षड्यन्त्रको पुलिन्दा**

माननीय पुलामीका साढुभाइ प्रकाश राजवाहकलाई हिरासतमुक्त गरेलगत्तै कागज गरियो। कागज गर्दा गोविन्द सारु मगरलाई मुख्य पात्रमध्येकै हैसियतमा इन्ट्री गराइयो। मगर माओवादी कार्यकर्ता अर्थात् रसुवाका वाइसिएल नेता रहेछन्। रसुवाकै अर्का वाइसिल नेता गणेश बिक र माननीय पुलामीका साली सबि सिन्तानसहित चार जनालाई दोस्रो पक्ष बनाई ३ करोड ५० लाख रूपैयाँ पीडित पुजन कार्कीलाई दिने गरी सम्झौता पत्र तयार भयो। ५ असोज २०७९ मा भएको सम्झौता पत्रमा साक्षी प्रमिला पुलामी बसेकी छन्।

उक्त सम्झौता पत्र २०७९ असोज ६ गते हेटौंडा-६ का वडाध्यक्ष विष्णुबहादुर दाहालले प्रमाणित गरेको देखिन्छ। यो सम्झौतापत्र तयार गर्दा माननीय पुलामीको सक्रियता अर्थपूर्ण मानिएको छ। कार्यान्वयन अहिलेसम्म नभएको उक्त सम्झौता प्रमाणित गरिदिने हेटौंडा-६ का वडाध्यक्ष विष्णुबहादुर दाहालले पनि कार्की परिवारलाई अन्याय भएको बताए तर न्याय दिलाउने पहल गर्न सकेको देखिँदैन। उनले हामीसँगको फोन संवादमा भने अन्यायमा परेका छन् सहयोग गरिदिनुहोला। माओवादी नेता सालिकराम जम्मकट्टेल मुख्यमन्त्री भएको बागमती प्रदेशको राजधानी हेटौंडामा माओवादी नेता तथा कार्यकर्ताहरूबाटै सर्वसाधारण नागरिकले न्याय नपाए कहाँ जाने न्याय खोज्न ? प्रचण्ड सरकारले भुइँ मान्छेहरूको न्याय दिन कहिले सोच्ला ? कार्यकर्ताले गरेको गल्ती-कमजोरी कहिले सच्याउन पहल गर्ला ? यो भने प्रतीक्षाकै विषय बनेको छ।

*- यदुनाथ बञ्जारा*



## पाठक-पत्र

### एमालेमा राजा-रानी र प्रधानमन्त्रीको खोजी

एमालेभित्र फाँटिरहेको धाँजा लुम्बिनी प्रदेशको अधिवेशनले झन् बाक्लो बनाएको छ। अध्यक्ष केपी ओलीले उद्घाटनदेखि बन्दसत्रसम्म बसेर सर्वसम्मत नेतृत्व छान्न निर्देशन दिनुभयो। तर, पार्टीभित्र विकास हुन थालेको दुई ध्रुवीय संघर्ष पटाक्षेप हुने गरी चुनाव भयो।

शुरुदेखि केपी ओलीसँग नजिक रहेर पाल्पामा सोम पाण्डेदेखि ठाकुर गैरेसम्मलाई टिक्न नदिने राधाकृष्ण कँडेल एमाले लुम्बिनी प्रदेशको अध्यक्ष हुन्। उनी ओलीप्रति आशक्त भए पनि उहाँले नै छानेर बनाउनुभएका महासचिव शंकर पोखरेल पक्षका भने हैनन्। लुम्बिनी प्रदेशमा एमालेभित्रै एकथरि शंकरपक्षीय र अर्काथरि विष्णु पौडेलपक्षीय हुने क्रममा उनी विष्णुतिर देखिएका हुन्। त्यही कारण शंकरले प्युठानका हरि रिजाललाई अध्यक्षमा उठाएका थिए। उनको मुख्य चिन्ता हो, प्रदेशमा आफ्नो साधनस्रोत परिचालन गर्ने र त्यसका लागि पार्टी इञ्चार्ज बन्ने, प्रदेश राजधानी सार्नेदेखि मुख्यमन्त्री हुँदा अर्थ मन्त्रालय आफैंले राख्ने।

यस्तै 'अति' गर्दा चुनावमा आफ्नो ठूलो फोटो राखेर भावी प्रधानमन्त्री, पार्टीको भावी अध्यक्ष भनी प्रचार गराए। यस्तो भएपछि घोराहीका मेयर तथा पोलिट्ब्युरो सदस्य नरुलाल चौधरीले कुनै एउटा भेलामा दिइएको भाषणको अडियो क्यासेट बालकोटलाई बुझाएका थिए। त्यसैमा ओलीले शंकर र सुजिताको जोडीप्रति कटाक्ष गर्दै भन्नुभयो- 'यिनीहरूले त राजारानी नै घोषणा गर्छन् कि क्या हो ?' यस्तै 'अति' का कारण शंकरले स्थानीय तहमा राम्रो परिणाम ल्याएको दाङमा पराजय व्यहोर्नुपरेको थियो। अध्यक्ष ओलीले एकदिन नरुलालहरूको कुरा सुनेपछि शंकरतिर घोचपेच गर्नुभयो- 'कहाँको प्रधानमन्त्री हुने रहेछ, दाङको हो कि क्या हो ?'

हरि रिजाल लामो समयदेखि वामदेवपक्षीय कार्यकर्ता हुन्। सोही पक्षबाट प्यूठानमा पार्टी अध्यक्ष पनि भए। शंकरको क्याबिनेटमा मन्त्री भएपछि वामदेवको साथ छाडे। गत वर्ष सम्पन्न प्रदेशसभा निर्वाचनमा सूर्य थापाकै योजनाअन्तर्गत हराइए र त्यो क्षेत्रबाट कांग्रेसका रोज राणाले जिते। भनिन्छ, रोजबाट सूर्यले कांग्रेस मत लिने र त्यस भेगको एमाले मत दिने समझदारीभित्र हरि सहिद भएका हुन्। अहिलेको प्रदेशसभा अधिवेशनमा पनि सूर्य हरिको पक्षमा थिएनन्। हरि प्यूठानमा राम्रो जनाधार भएका व्यक्ति मानिन्छन्।

शंकरले चुनावमा आफ्नो फोटो झुण्ड्याएको दृष्टान्त पार्टीको केन्द्रीय बैठकसम्म प्रस्तुत भयो। विष्णु पौडेलले फोटो टाँस्नेसम्बन्धी मापदण्ड बनाउनुपर्छ भनेपछि अध्यक्ष ओलीले जिवित नेतामध्ये आफ्नोमात्रै फोटो राख्ने गरी निर्देशन जारी गर्नुभयो। दिवंगत तीन नेता (मदन, आश्रित, मनमोहन) को मात्रै फोटो राख्ने भन्दा पनि हुन्थ्यो। तर, तीन जनाको सानो र आफ्नो ठूलो फोटो राख्ने गरी सर्कुलर जारी भयो। लुम्बिनीको अधिवेशनमा गोकर्ण विष्ट, पद्मा अर्याल, छविलाल विश्वकर्माहरू राधाकृष्णको पक्षमा थिए। हरिको पक्षमा शंकरसहितका केही नेता लागे। दाङकै नरुलाल शंकरतिर लागेनन्।

### • भूपू प्रधानन्यायाधीशका छोरालाई किन जोगाएको ?

जनआस्थाको वर्ष २९, अंक २६ मिति २०८० भदौ १३ गते छापिएको एउटा समाचारप्रति हाम्रो गम्भीर ध्यानाकर्षण भएको छ। 'मुख्यसचिवपछि राष्ट्रपतिका सल्लाहकार तानिँदै' शीर्षकमा प्रकाशित समाचारको चुरो कुरो पत्रिकाले दिएको पाइएन। सरकारले खरिद गरेको राष्ट्रिय भुक्तानी प्रणाली (एनपीएस) को हार्डवेयर र सफ्टवेयर खरिदमा घोटाला भएको र तिनलाई बयान लिएकोसम्म समाचारमा उल्लेख छ।

अर्थ मन्त्रालयले राष्ट्रिय सूचना प्रविधि केन्द्रको निम्ति आर्थिक वर्ष २०७४/७५ मा विनियोजन गरेको झण्डै २५ करोडको बजेटबाट उक्त सफ्टवेयर तथा हार्डवेयर खरिद गरिएको सन्दर्भमा शुरुदेखि पर्दा पछाडिबाट सहभागी एक जनाको संलग्नताबारे जनआस्थाले थाहा नपाएको हो वा नियोजित ढंगले कुरा लुकाइएको हो ? उक्त केन्द्रको स्थापना, सफ्टवेयर र हार्डवेयरको खरिद बिक्रीमा एक जना भूतपूर्व प्रधानन्यायाधीशका छोराबारे किन मौनता साँधियो ? जनआस्थाका सम्पादक किशोर श्रेष्ठको ती प्रधानन्यायाधीशसँग कत्तिको घनिष्ठ सम्बन्ध छ भन्ने थाहा पाउन डेढ दशकदेखिको पत्रिका नियमित अध्ययन गर्ने जो-कोहीलाई गाह्रो पर्दैन। उनै भूपूका छोरा अभिषेक श्रेष्ठ सफ्टवेयर तथा हार्डवेयरको कारोबारसम्बन्धी एउटा कम्पनीका मालिक हुन्। नेक्सजेन नामक कम्पनीको सरकारी निकायसँगको संलग्नता पछिल्लो एक दशकमा अरुको भन्दा बढी देखिन्छ। राष्ट्रिय सूचना प्रविधि केन्द्र स्थापना, त्यसको सफ्टवेयर तथा हार्डवेयर खरिदमा सल्लाह र नेपाल सरकारले प्रयोग गर्ने इन्टरनेट, डाटा सेन्टरको जिम्मेवारी र सञ्चालन दायित्व करोडौं रूपैयाँमा उनै अभिषेकको कम्पनीले लिएको छ। यी सबै वास्तविकता थाहा पाउँदा पाउँदै पनि मुख्यसचिवदेखि पूर्व गभर्नरसम्म अख्तियार गएको, अन्य उच्च अधिकारीलाईसमेत पत्र लेखिएको, नेपाल क्लियरिङ हाउस लिमिटेड (एनसिएचएल) का प्रमुख कार्यकारी अधिकृत निलेशमान प्रधानलाई सिष्टम अपरेसनबारे जानकारी लिन बोलाइएको विषय पनि जनआस्थाले थाहा पाएको छ। तर हेक्का रहोस्, सरकारले डिजिटल भुक्तानी कारोबारको लागि खोल्न लागेको उक्त केन्द्र सञ्चालनमा प्रारम्भिक चरणमा भाँजो हाल्ने विगतमा त्यही एनसिएचएलका हर्ताकर्ता थिए।

*- उमेशलाल श्रेष्ठ*

### • उदयपुरका जेलरको उपद्रो

उदयपुर जिल्लामा डिगम कार्की नामक जेलर छन्। उनी त्यहाँ बसेको करिब ५ वर्ष भइसकेको छ। उनीमाथि कैदीलाई बढी मूल्यमा सामान किन्न लगाएर नाफा सिडिओ जनार्दन गौतमलाई समेत दिने गरेको आरोप छ। उनले ३ वर्षदेखि संगम नेपाली भन्ने जँड्याहालाई चौकीदार बनाएका छन्। संगमले बाहिरबाट महँगोमा बंगुर र अन्य सामान ल्याएर बढी पैसामा कैदीलाई खान र किन्न बाध्य बनाउँछन्। कारागारभित्रको बेथितिबारे रिपोर्ट गर्ने कैदीलाई ठोकठाक पार्ने काममा यिनले ५ जनालाई पालेका छन्। ती रावल श्रेष्ठ, बुद्धिमान कार्की, हरि खत्री, भूषण राई र रेगन रानाहरू हुन्। यिनले कुटेर कति जनाको दाँत झरिसकेको छ। यी सबै घटनाबारे थाहा हुँदा पनि अन्य जिल्लाका कारागारमा पठाएर तितरबितर पार्न खोज्दैनन्। सबै कुरा पैसाले रोकेको छ। कारागारमा करिब २५० जना कैदी छन्। त्यहाँ जम्मा ६ वटा धारा र ४ वटा ट्वाइलेट मात्र छन्। बिहान दिसापिसाब र नुहाउने काम यी ५ जना कैदी डनले नगरेसम्म अरुको पालो आउँदैन।

उपर्युक्त व्यहोरा जेलर, सिडिओ र कारागार विभागमा निवेदन गर्दासम्म पनि मर्का कसैले बुझेन। यस्तै अत्याचार देशका अन्य कारागारमा पनि भइरहेका होलान्। भित्र पत्रिका हेर्न, टिभी हेर्न पनि यिनै गुण्डाले रोक्छन्, हेऱ्यो भने डिस्टर्ब भयो भनेर कुटपिट गर्छन्। एकै खाटमा ३ जनासम्म सुत्नुपर्छ। खेलकुदका सामान पनि गुण्डाकै हातमा हुन्छ। त्यो अत्याचारलाई नरोक्ने हो भने उदयपुरमा निकट भविष्यमै ठूलो घटना हुनेवाला छ।

*- उदयपुर जिल्ला कारागारका पीडित कैदीहरू*

### • सेनापतिलाई विशेष अधिकार सुम्पिइयो

सेनाले 'मानार्थ बढुवा र विशेष बढुवा सिफारिस निर्देशिका, २०७६' लागु गर्ने भएको छ। बाझिएका केही व्यवस्था संशोधनपश्चात् निर्देशिका कार्यान्वयनमा गएको छ। भदौ १३ गते प्रभुराम शर्माको अध्यक्षतामा बसेको बैठकले संशोधित निर्देशिकालाई स्वीकृति दिएको सेनाले जनाएको छ। 'सैनिक सेवा नियमावली, २०६९ तथा मानार्थ बढुवा र विशेष बढुवा सिफारिस निर्देशिका, २०७६ मा बाझिएका केही व्यवस्था' छलफलका लागि नीति तथा योजना निर्देशनालयले बैठकमा पेश गरेको थियो। उक्त निर्देशिकामा भएको 'शर्तबमोजिमको तालिम पूरा गरेको' प्रावधानलाई यथावत् राखिएको छ भने 'तर, सकलदर्जाले सम्पादन गरेका कार्यले राष्ट्र र सैनिक संस्थाको हितमा पुऱ्याएको विशेष योगदानको मूल्यांकन गरी बढुवा समितिले विशेष बढुवाको लागि गरेको सिफारिस उपयुक्त लागेमा प्रधानसेनापतिले सरकारसमक्ष सिफारिस गर्न सक्नेछ', थप गरिएको छ। त्यस्तै, 'सैनिक स्वास्थ्य सेवा समूहका प्राविधिक पदिक तथा बिल्लादारको सरुवा तथा बढुवा निर्देशिका, २०८०' फिर्ता पठाइएको छ। स्वास्थ्य महानिर्देशनालयले पेश गरेको निर्देशिकालाई अन्तिम स्वरूप दिएर पि.एस.ओज् समितिको बैठकमा पुनः पेश गर्ने निर्णय गरिएको छ। सैनिक मेडिकल कोरअन्तर्गत कार्यरत प्राविधिकतर्फका पदिक तथा बिल्लादारहरूको एकद्वार प्रणालीबाट वृत्तिविकास गर्नुपर्ने आवश्यकतालाई मध्यनजर गर्दै महानिर्देशनालयले काज, सरुवा तथा बढुवा प्रक्रियालाई थप व्यवहारिक, व्यवस्थित, पारदर्शी तथा समयाअनुकूल बनाउनका लागि सो प्रस्ताव गरेको थियो। तर, त्यसमा थप राय-सुझाव समावेश गर्नुपर्ने र काज तथा सरुवा प्रक्रियामा देखिएका समस्या, त्यसले संगठन र कार्यसम्पादनमा पार्ने प्रभावबारे थप स्पष्ट रूपमा खुलाउनुपर्ने भन्दै बैठकले पुनरवलोकनका लागि पठाएको हो।

पि.एस.ओजको बैठकमा बलाधिकृत सरोजप्रताप राणा, बलाध्यक्ष सीताराम खड्का, महानिर्देशक ताराध्वज पाण्डे, व्यवस्था नीति तथा योजना विभागका प्रमुख महानिर्देशक अशोकराज सिग्देलको उपस्थिति थियो। त्यस्तै, सैनिक तालिम महानिर्देशनालयका सन्तोषकुमार ढकाल, प्रबन्धरथी विभागका निरीक्षणाधिकृत उपरथी योगराज शर्मा, सैनिक ईण्टेलिजेन्स महानिर्देशनालयका सुदर्शन सिलवाल पनि बैठकमा सहभागी थिए।

**सैन्य लाइनबाट भागे सैनिक**

यसबीच सैनिक मिलन बाँस्तोला सैन्य लाइनबाट भागेका छन्। नम्बर २ तालिम केन्द्र, सैनामैना ब्यारेक, रूपन्देहीमा कार्यरत उनी गत भदौ ३ गतेदेखि सञ्चालन भइरहेको सि.सं. १४ सैन्य आधार तालिममा थिए। अस्थायी ब्याच नम्बर ४८३४० भएका उनी भदौ १३ गते दिउँसो साढे ४ बजे भागेका हुन्। लमजुङको मर्स्याङ्दी गाउँपालिका-९ का फणिन्द्रनाथ बाँस्तोलाका नाति एवं ध्रुवका छोरा उनलाई सेनाले छ्याप्छ्याप्ती खोजिरहेको छ।

### • सेनाका हरिचन्द्रको अर्को विश्व रेकर्ड

नेपाली सेनाका हरिचन्द्र गिरीले चौथो गिनिज विश्व रेकर्ड कायम गरेका छन्। दाङका २९ वर्षे गिरीले दुबै हातले टेकेर ७५ वटा सिँढी २५ दशमलव ३ सेकेण्डमा सबैभन्दा छिटो पूरा गरेका हुन्। उक्त दूरीमा विश्व रेकर्ड यसअघि संयुक्त राज्य अमेरिकाका मार्क केन्नीले राखेका थिए। यो बाहेक गिरीले ५० सिँढीमा पनि आफ्नै रेकर्ड बनाएका छन्। जसमा १२ दशमलव ६५ सेकेण्डमा लक्ष्य पूरा गरेको उल्लेख छ।

उनैले गोडाको बीचमा फुटबल च्यापेर १० मीटर र ५० मीटरको दूरीसम्म छिटो पुगेको रेकर्ड पनि कायम गरेका छन्। जसमा १० मीटर ४ दशमलव ४९ सेकेण्ड र ५० मीटर २५ दशमलब ५८ सेकेण्डको विश्व रेकर्ड उनै गिरीको हो।

# बालेनलाई सल्लाह दिएर के गर्नु, मुढे पारा छ

**कीर्तिनाथ शर्मा पौडेल, अधिवक्ता**

*वरिष्ठ अधिवक्ता पदमनाथ शर्माको बिँडो थाम्दै कानुनी क्षेत्रमा होमिएको छन् कीर्तिनाथ साढे दुई दशकदेखि । कोरोनाको कहरबीच सार्वजनिक महत्वका विषयमा बढी मुद्दा-मामिला गरेर चर्चामा आएका उनलाई 'कोभिड लयर'को उपनामले पनि चिनिन्छ । चाहे केपी शर्मा ओलीले दुई पटक प्रतिनिधिसभा भंग गर्दा होस् वा ५२ भाइको नियुक्ति गर्दा, राष्ट्रिय सभा सदस्य विज्ञ व्यक्तिलाई नियुक्त नगरी वामदेव गौतमलाई मनोनयन गर्दा होस् वा रवि लामिछानेको राहदानी प्रकरण, बालेन साहको अदालती आदेश मान्दिन भन्ने अभिव्यक्ति, कोरोना कालमा भएको १० अर्बको हिनामिनादेखि कोभिड कालमा विदेशमा अलपत्र नेपाली ल्याउनका लागि सर्वोच्चमा रिट दायर गरेर अन्तरिम आदेश जारी गराउने अधिवक्ता हुन्, शर्मा । हालै मात्र प्रत्येक सांसदलाई ५ करोड बाँडेर सांसदलाई ठेकेदार बनाउने सरकारी प्रयास यिनैले उल्टाइदिएका हुन् । युनिभर्सल कानुनी सेवा केन्द्रमार्फत शर्माका पति/पत्नी नै कानुनी सेवामा रमाइरहेका छन् ।* **– हरि गजुरेल**

**० कहिले सिंहदरबार जलाउने धम्की, त कहिले अदालतको आदेश मान्दिनँ भन्ने अभिव्यक्ति, मेयर बालेन साहको पछिल्लो हर्कतलाई कसरी लिइरहनुभएको छ ?**

- यो अभिव्यक्ति गैरकानुनी छ, व्यावहारिक हिसाबले पनि । उहाँले अभिव्यक्ति तुरुन्त फिर्ता लिएर माफी माग्नुपर्छ अन्यथा कानुनअनुसार कारवाहीको भागिदार हुनुपर्छ । महानगरबासीले उहाँलाई नगरको विकासका लागि चुन्नुभएको हो । डोजर चलाएर वाहवाहीको पात्र त हुनुहोला तर राज्यको ऐन, कानुन, नीति नियम र अदालत नै मान्दिन भन्ने छुट उहाँलाई छैन ।

**० सिंहदरबार जलाउने अभिव्यक्तिमा बालेनलाई कस्तो कानुनी कारबाही हुन सक्छ ?**

- राजद्रोह मुलुकी अपराध ऐनको दफा ५० मा यससम्बन्धी व्याख्या र व्यवस्था गरिएको छ । उहाँको अभिव्यक्तिले मुलुकप्रति अफवाह फैलाउने, राष्ट्रप्रति द्वेष जगाउने र अपमानजन्य काम गरेको छ । मेयरमा निर्वाचित भएलगत्तै उहाँले मुलुकको कानुन पालना गर्नेछु भनेर शपथ लिनुभएको छ । कानुन परिपालना गर्नुपर्ने व्यक्तिबाट त्यस किसिमको अभिव्यक्ति आउनु दुःखद र र निन्दनीय कुरा हो । उहाँको अभिव्यक्तिले कानुनको शासनको घोर अवमूल्यन भएको छ । यो सरासर दुषित मनशायबाट आएको भन्ने प्रष्ट छ ।

**० जतिखेर महानगरपालिकाले हिन्दी चलचित्रमाथि प्रतिबन्ध लगायो । त्यस क्रममा अदालतको आदेश मान्दिन भने अभिव्यक्ति दिनुभएको थियो बालेनले । त्यसविरुद्ध तपाईंले रिट नै दायर गर्नुभएको थियो, होइन र ?**

- सिनेमाको पेटबोलीमा जे जस्तो थियो, त्यो आफ्नो ठाउँमा छ । त्यसलाई करेक्सन गर्न छुट्टै नियामक निकाय छ राज्यको । महानगरपालिकाले सिनेमामा रोक लगाएपछि हल मालिकहरू उच्च अदालत गए । उच्चले अन्तरिम आदेश दियो सिनेमा निर्वाध चल्न दिनू भनेर । उहाँले अदालतको आदेश मान्दिन भन्न थालेपछि अदालतको अवहेलना भयो, उहाँलाई कानुनी कठघरामा उभ्याइनुपर्छ भनेर सर्वोच्चमा रिट दायर गरेका थियौं । सो मुद्दामा वारिस नलाग्ने गरी बाटोको म्याद बाहेक सात दिनको समय दिएर स्वयं उपस्थित हुनु भनिएको थियो । उहाँले सोहीअनुसार लिखित जवाफ पेश गर्नुभएको छ । यही भदौ २४ गते सोको पेशी तोकिएको छ । कहिले सिंहदरबार जलाउँछु भन्दै अराजकता निम्त्याउने, तानाशाही प्रवृत्तिलाई प्रश्रय दिने कुरा नितान्त गैरकानुनी छ ।

**० बालेन साहका कानुनी सल्लाहकारमा ओमप्रकाश अर्याललगायतले सल्लाह दिँदैनन् कि बालेनले सल्लाह नलिने रहेछन् ?**

- सल्लाहकारले पनि सल्लाह दिएकै होलान् तर उहाँको प्रस्तुति मुढे पाराको भयो । त्यसमाथि देशका जनप्रतिनिधिलाई कानुन जानिन, बुझिन भनेर छुट पाइने स्थिति छैन । नगरपिताबाटै कानुन पालना हुँदैन भने महानगरबासीले उहाँबाट के सिक्ने ?

**० चौतर्फी दबाबपछि उहाँले सिंहदरबार जलाउने स्टाटस मेट्नुभएको छ । स्टाटस मेट्दैमा माफी पाइने हो र ?**

- उहाँको अभिव्यक्ति नै तानाशाहीलाई प्रमोट गर्नेगरि आयो । उक्त अभिव्यक्तिविरुद्ध अहिलेसम्म कुनै उजुरी परिसकेको छैन । उजुरी परेन भने त केही भएन । सोविरुद्ध नेपाल राज्य, सर्वसाधारण कानुन व्यवसायी जो कोहीले उजुर गर्न सक्छन् । उजुर हालेको खण्डमा स्टाटस मेटेर सुख पाइन्न ।

**० स्वतन्त्र रूपमा उदाएका रवि लामिछानेको राहदानी खारेजी प्रकरणमा महान्यायाधिवक्ता कार्यालय चुक्यो । तपाईं महान्यायाधिवक्ता कार्यालयको निर्णयविरुद्ध सर्वोच्च पुग्नुभयो । तर, मुद्दा अगाडि बढेन त ?**

- नेपाली नागरिकता नत्यागी विदेशी नागरिकता लिनुभयो रवि लामिछानेले । हाम्रो आपत्ति रह्यो, एउटै व्यक्ति एकै पटक दुई देशको नागरिक हुनै सक्दैन । उताको नागरिकता नत्यागी यहाँ आएर सोही व्यक्तिले नेपाली नागरिकको हैसियतमा काम गर्न मिल्दैन । शुरुमा दायर गरेको रिटलाई संवैधानिक इजलासले बदर गर्‍यो । जिल्ला प्रशासन कार्यालयबाट नागरिकता लिनुभयो तर पहिलो समाप्ती गरेको देखिएन, त्यसमा पनि उजुरी दियौं । सर्वोच्चले इग्नोर गर्‍यो । चाहे रवि लामिछाने, बालेन साह वा हर्क साम्पाङ सबैले कानुनको अक्षरशः पालना गर्नुपर्छ । सार्वजनिक ओहोदामा भएका व्यक्तिले त झनै कानुनको पालना गर्नुपर्छ । अगुवाहरूले नै कानुनको पालना गरेनन् भने राष्ट्रिय, अन्तर्राष्ट्रिय रूपमै गलत म्यासेज जान्छ । शिष्ट रूपमा प्रस्तुत हुनुपर्ने यी व्यक्ति कानुनलाई नमान्नाले, नटेर्नाले र छल्नाले अझै विवादमा परिरहेका छन् ।

**० भनिन्छ, हाम्रा श्रीमान्हरू कानुनमा टेकेर कम, उनीहरूको पछाडि कत्तिको भीड छ त्यही हेरेर बढी फैसला गर्छन् । कतिको सत्य हो ?**

- विगतमा केही न्यायमूर्तिबाट गलत किसिमको फैसला भएको छ । सँगसँगै उनीहरू कारवाहीको भागीदार पनि भएका छन् । खराब आचरण भएका न्यायाधीशलाई न्यायपरिषद्ले कारबाही गरेको छ । त्यस्ता केही न्यायाधीशले न्यायपालिकालाई दूषित बनाएका थिए । अहिले पनि न्यायपरिषद्मा उजुरीहरू छन् । उजुरी परेका न्यायाधीशलाई पेण्डिङमा न्यायपरिषद्मा तान्ने काम पनि भएको छ । केही न्यायमूर्तिका कारण न्यायप्रति सर्वसाधारणप्रति नैराश्यता उत्पन्न भएको छ ।

**० ललिता निवास जग्गा प्रकरणमा सरकारी वकिलको कार्यालय कहाँनेर चुक्यो ?**

- भूमिसम्बन्धी ऐन २०२१ को दफा ५ ले कुनै पनि सरकारी सार्वजनिक जग्गामा मोही लाग्न सक्दैन भनेर बकाइदा लेखिदिएको छ । त्यसैलाई समर्थन गरी सर्वोच्चबाट थुप्रै नजिर प्रत्युपादन भएका छन् । तर, त्यसलाई अनदेखा गरेर सरकारी जग्गामा मोही खडा गरी माफियाको हातमा पुर्‍याइयो । काठमाडौं जिल्ला अदालतले संगठित अपराधमा मुद्दा चलाउन सिआइबीलाई अनुमति पनि दियो । ५७ दिन लगाएर अनुसन्धान पनि गर्‍यो । प्रारम्भिक अनुसन्धानमा दोषी ठहर्‍यायो । राय दियो, प्रतिवेदन बुझायो तर सरकारी वकिलको कार्यालयले मुद्दा चलाएन, कारण देखायो संगठित अपराध निवारण ऐन ०७० मा मात्र आएको र यो घटना त्यसभन्दा अगाडि नै भएको । तर त्यसो गर्न मिल्दैनथ्यो । खरदारदेखि प्रधानमन्त्रीसम्मको मिलेमतोमा सरकारी जग्गा रातारात हत्याउने काम भएको छ । मुलुकको सम्पत्ति भूमाफियाको हातमा सुम्पने काम भएको छ । तर जनताको आँखामा छारो हाल्ने गरी मुद्दा चलाइएको छ । नेपालको न्यायिक इतिहासमा यी काम काला अक्षरले लेखिनेछन् ।

**० २१ न्यायाधीशको दरबन्दी रहेको सर्वोच्च अदालत १३ न्यायाधीशको भरमा चलिरहेको छ । न्यायाधीशहरू रिक्त हुनुभन्दा १ महिनाअघि नियुक्ति प्रक्रिया शुरु हुनुपर्नेमा चालामाला उस्तै देखिन्छ । यसलाई कसरी लिने ?**

- हरिकृष्ण कार्की नौ महिना कामु, ५० दिन मात्र प्रधानन्यायाधीश । हालै विनोदकुमार शर्मा न्यायाधीशमा सिफारिस हुनुभएको छ । संसदीय सुनुवाइ चल्दै छ । सर्वोच्चमा २८ हजार बढी मुद्दा फैसला हुन बाँकी छ । उच्च, जिल्लामा पनि न्यायाधीशहरू रिक्त छन् । नवनियुक्त प्रधानन्यायाधीश विश्वम्भर कुमार श्रेष्ठलाई यो विषयमा नेपाल बारले सुझाएको छ । दरबन्दी पूरा गर्छु भन्नुभएको छ ।

**बालेन साह, रवि लामिछाने वा हर्क साम्पाङ सबैले कानुनको अक्षरशः पालना गर्नुपर्छ ।**

•••

**अदालतको मानहानिमा बालेनलाई भदौ २४ गते पेशी तोकिएको छ ।**

•••

**जनताको आँखामा छारो हाल्ने गरी मुद्दा चलाइयो ।**

**० प्रधानन्यायाधीशको रोलक्रममा हाल्ने गरी भागबण्डामा न्यायाधीश नियुक्ति गर्ने प्रक्रिया कत्तिको ठीक हो ?**

- नयाँ प्रधानन्यायाधीश न्यायालयमा राजनीतिको छायाले पर्न दिन्न भन्नुभएको छ । अहिले प्राविधिक कारणले गोलाप्रथामै छ । पूर्णत अटोमेसनमा न्यायपालिका गइसकेपछि ती समस्या हल भएर जान्छ ।

**० चोलेन्द्रलाई प्रधानन्यायाधीशबाट हटेपछि न्यायालयको विकृति कत्तिको सुधियो त !**

- चोलेन्द्र प्रधानन्यायाधीश हुँदा न्यायालयमा बढी अराजकता थियो । पेशी तोक्दा मनपरी थियो । बिचौलियाको बिगबिगी थियो । चोलेन्द्र हटेपछि धेरै शान्त भएको छ ।

**० न्यायपरिषद् र संवैधानिक परिषद् नै पंगु भएको कारण आज न्यायालयको यो गति भएको हो भन्छन् नि ?**

- संवैधानिक परिषद् र न्यायपरिषद् सक्रिय नहुँदा पनि यो अवस्था आएको हो । तालिमको व्यवस्था नहुँदा पनि समस्या आएको छ । न्यायपरिषद्को संरचना हेर्नुहोस् । न्यायाधीश नियुक्तिमा राजनीतिको छायाँ परेपछि त्यसरी नियुक्त भएका न्यायाधीशले त्यसैअनुसार काम गर्ने भए । न्यायाधीश मध्यरातमा नियुक्त भएको कुरा सुशीला कार्कीले पुस्तकमै लेख्नुभएको छ ।

**० सर्वोच्चले १९ प्रतिशत मात्र मुद्दा फर्स्योट गर्न सकेको देखियो । यस्तो न्याय सम्पादनबाट कसरी जनआस्था बढ्ला न्यायालयप्रति ?**

- संविधानले नै लोककल्याणकारी व्यवस्थामा जनतालाई शीघ्र न्याय दिनु भनेको छ तर जनताले न्याय पाएका छैनन् । ढिलो न्याय दिनु भनेको न्याय दिन इन्कार गर्नु हो भनिन्छ । अहिले सर्वोच्चमा १३ जना न्यायाधीश छन् । अनिलकुमार सिन्हा, ईश्वर खतिवडा, आनन्दमोहन श्रेष्ठ उमेर हदका कारण घर जाँदै हुनुहुन्छ, छिट्टै । अब पनि छिटो न्यायाधीश नियुक्ति नगर्ने हो भने समस्या अझै विकराल हुँदै जान्छ । मुद्दा बढ्दै छन्, न्यायाधीशहरू घट्दै छन् । कुर्सीले न्याय गर्ने त होइन ।

**० केही समयअघि काठमाडौं जिल्ला अदालतका न्यायाधीश राजकुमार कोइराला र अधिवक्ता रुद्रप्रसाद पोखरेलको लेनदेन अडियो सार्वजनिक भयो । यो प्रकरणले न्यायमूर्तिहरूलाई भ्रष्ट बनाउने त वकिलहरू नै रहेछन् है !**

यो विषयमा नेपाल बारले कार्यदल बनाएर अध्ययन गरिरहेको छ । न्यायपरिषद्ले पनि अध्ययन टोली बनाएर अध्ययन गर्दै छ । उहाँ दोषी हो भने कानुन व्यवसायी परिषद्ले कारबाही गर्ला । विगतमा सचेत गराउने, लाइसेन्स रद्द गर्ने काम भएको छ ।

**० सार्वजनिक सरोकारका विषय आउनेबित्तिकै रिट बोकेर सर्वोच्च दौडन केले उत्प्रेरित गर्छ तपाईंलाई ?**

- पिताको प्रेरणाले । २३ वर्ष भयो कानुनी अभ्यास गरिरहेको । कोभिड शुरु भएपछि बिदेसिएकाहरूलाई सरकारले बोर्डरमा रोक्यो । हामीले दायर गरेको रिटमा सर्वोच्चले अन्तरिम आदेश दियो । विषादियुक्त आयातित तरकारीले बजार पाउने तर नेपाली तरकारीले बजारै नपाउने । भारतबाट सातामै करोडौँको तरकारी आउने । त्यसको विषाक्त मापन गरिनुपर्छ भनेर रिट हालेको थिएँ । त्यसमा पनि अन्तरिम आदेश दिएको थियो सर्वोच्चले । कोभिडताका जनस्वास्थ्यमाथि भएको खेलवाडमा स्वास्थ्यका प्रवक्तालाई ल्याएर सर्वोच्चमा बयान गराइयो । केपी शर्मा ओलीले दुई पटक प्रतिनिधि सभा विघटन गर्नुभयो । जनमतको अवमूल्यन भयो भनेर रिट हाल्यौं । उहाँद्वारा नियुक्त ५२ पदाधिकारीविरुद्ध रिट हाल्यौं । यसको पेशी सरिरहेको छ । चुरे भावरको गिट्टीलाई दोहन गर्ने काम भएकोमा त्यो राष्ट्रिय सम्पत्ति हो भनेर बहस गरियो । सांसदहरूलाई ठेकेदार बनाउने विनियमविरुद्ध मुद्दा लडेर सरकारलाई ट्र्याकमा ल्याउने काम गरियो । यसबाट राज्यको १८ अर्ब बढी बचेको छ । सांसदको काम नीति बनाउने हो । अधिकांश सार्वजनिक र राष्ट्रिय महत्वका विषयमा रिट हालिन्छ, कतिमा आफैंले बहस गरिन्छ, यो सबै पिताकै प्रेरणाले हो ।

## धरापमा हैदरावाद हाउसको सो सम्झौता !

प्रधानमन्त्री पुष्पकमल दाहाल 'प्रचण्ड' तीन सातापछि चीन जाने तयारी छ । गत जेठमा उहाँले भारतको चार दिने भ्रमण गर्नुभएको थियो । जेठ १८ गते नयाँदिल्लीस्थित हैदरावाद हाउसको नीलगिरी कक्षमा र समकक्षी नरेन्द्र मोदीसँग भेटवार्तापश्चात् दुई देशका प्रतिनिधिमण्डलबीच औपचारिक कुराकानी भएको थियो । सो अवसरमा भएका विभिन्न सम्झौतामध्ये नेपाल-भारतबीच डिजिटल भुक्तानी गर्ने विषय पनि एक हो । नेपालका तर्फबाट एनसिएचएलका सिईओ निलेशमानसिंह प्रधान र भारतको तर्फबाट एनआइपीएलका सिइओ रितेश शुक्लाले दुवै देशका प्रधानमन्त्रीसामु एमओयुमा हस्ताक्षर गरेका थिए । सम्झौताको मुख्य उद्देश्य नेपाल-भारतबीच सहज रूपमा क्रस बोर्डर डिजिटल पेमेन्ट गराउने उल्लेख थियो ।

दुवै मुलुकमा डिजिटल भुक्तानी गराउन भारतीय युनिफाइड पेमेन्ट्स इन्टरफेस र नेपालको नेशनल पेमेन्टस इन्टरफेसको कारोबारलाई एकीकृत बनाइने बुँदा पनि सम्झौतामा छ । त्यसपछि दुवै मुलुकका बैंक खाता वाहकले एक अर्को मुलुकमा आ-आफ्ना डिजिटल पेमेन्ट्स एप्लिकेसन्सबाट रकम ट्रान्सफर र मर्चेन्ट पेमेन्ट्स गराउनु सम्झौताको उद्देश्य हो । यसबाट विशेषगरी दुवै मुलुकका विद्यार्थी, धार्मिक तीर्थयात्री र अन्य प्रयोजनमा पुग्नेले नगद बोक्नुपर्ने झन्झट हट्ने भनिएको छ । तर, तीन महिनासम्म डिजिटल पेमेन्टस कार्य अघि नबढेपछि अनेक आशंका बढेको बताइन्छ । भारतले नेपालको एनसिएचएलको सरकारी स्वामित्वको विषयलाई प्रमुख विषय बनाएको हल्ला चलाइएको छ । त्यसमा सरकारी अर्थात् राष्ट्र बैंकको १० प्रतिशत र बाँकी ९० प्रतिशत स्वामित्व विभिन्न बैंक तथा वित्तीय संस्थाको देखिन्छ ।

भारतसँग डिजिटल पेमेन्टसम्बन्धी सम्झौता कार्यान्वयनको रफ्तार अघि नबढे पनि ठप्प नभएको राष्ट्र बैंकका अधिकारीले बताएका छन् । बैंकको भुक्तानी प्रणाली विभाग स्रोतले भन्यो, 'टेक्निकल टोली गठन भएको छ । काम सुस्त भएको चाहिँ पक्कै हो । तर, सम्झौता नै धरापमा पर्न लागेको भने होइन ।' स्रोतका अनुसार डिजिटल पेमेन्टको सम्झौता नहुँदा नेपालीभन्दा बढी घाटा नेपाल आउने भारतीय नागरिकलाई भइरहेको छ । धेरै संख्यामा आउने उनीहरूले भुक्तानीको निम्ति नगदलगायत अन्य माध्यमको प्रयोग गर्नुपरेको छ । सम्झौता कार्यान्वयन भएमा उनीहरूले मोबाइलमा भएको बैंक खाताको क्युआर कोडबाट सजिलैसँग यताको खर्च रकम भुक्तानी गर्न सक्छन् ।


नेपाल सरकार
अर्थ मन्त्रालय
आन्तरिक राजस्व विभाग

**मूल्य अभिवृद्धि करको विवरण मासिक बुझाउनु पर्ने सम्वन्धी जरुरी सूचना**

मूल्य अभिवृद्धि कर नियमावली, २०५३ को नियम २६ मा संशोधन भई साविकमा रहेको ईंटा उद्योग, होटल, पर्यटन तथा चलचित्र घरले चाहेमा विवरण पेश गर्ने अवधि चौमासिक कायम गर्न सक्नेछ भन्ने व्यवस्था खारेज भएको छ। संशोधित व्यवस्था अनुसार मूल्य अभिवृद्धि करमा दर्ता भएका वार्षिक एक करोड रुपयाँ भन्दा बढीको कारोवार भएका **ईंटा उद्योग, होटल, पर्यटन तथा चलचित्र घर**ले २०८० साउनदेखि मासिक रुपमा मूल्य अभिवृद्धि करको विवरण दाखिला गर्नु हुन यो सूचना प्रकाशित गरिएको छ। साथै हाल द्वैमासिक अवधिमा मूल्य अभिवृद्धि कर विवरण दाखिला गर्ने सुविधा नरहेकोले वार्षिक एक करोड रुपयाँ भन्दा बढीको कारोवार भएका करदाताले मासिक रुपमा नै विवरण दाखिला गर्नु पर्ने समेत सूचित गरिएको छ। थप जानकारीको लागि आफू दर्ता रहेको कार्यालयमा सम्पर्क राख्नु हुन जानकारी गराईन्छ।

**मूल्य अभिवृद्धि करको चौमासिक विवरण दाखिला गर्ने सम्वन्धी जरुरी सूचना**

वार्षिक एक करोड रुपैयाँसम्मको मूल्य अभिवृद्धि कर लाग्ने कारोवार गर्ने करदाताले चार चार महिनामा विवरण पेश गर्न पाउने गरी कर सहभागिता लागत र समय घटाई साना करदातालाई सुविधा दिन मूल्य अभिवृद्धि कर नियमावली, २०५३ को नियम २६ बमोजिम आ.व. २०७९/८० (सम्वत् २०७९ साउनदेखि २०८० असारसम्म)को मूल्य अभिवृद्धि कर विवरण दाखिला गरी वार्षिक एक करोड रुपयाँसम्मको कारोवार भएका करदाताहरुको कर अवधि २०८० साउनदेखि मासिकबाट चौमासिक कायम गरिएको छ।

मासिक रुपमा विवरण दाखिला गर्दै आएका करदाताले २०८० साउनदेखि हरेक चार महिना अर्थात साउन, भदौ, असोज र कात्तिकको विवरण मंसिर २५ गतेसम्म, मंसिर, पुस, माघ र फागुनको विवरण चैत २५ गतेसम्म एवं चैत, वैशाख, जेठ र असारको विवरण साउन २५ गतेसम्म पेश गर्ने सुविधा प्रदान गरिएको व्यहोरा सूचित गरिएको छ। माथि उल्लिखित करदाताले मासिक कर विवरण दाखिला गर्न चाहेमा सम्वन्धित आन्तरिक राजस्व कार्यालय/करदाता सेवा कार्यालयमा पन्ध्र दिनभित्र जानकारी दिनु हुन समेत सूचित गरिन्छ।



ANYTIME TO MAKE THINGS RIGHT FOR YOU

To provide the best customer care you deserve, we are elated to announce that we are now just one ring away to make things right for you.

GLOBAL CONNECT

Call Us : +977-1-5970600

गुनासो | जानकारी | सूचना | सुझाव

Global IME Bank

Corporate Office: Kamaladi, Kathmandu
P.O. Box: 19327
Tel: +977 1 4228671/4226247
E-mail: globalconnect@gibl.com.np

## फोटो



दिपेन्द्रराज गिरी



युवा जति विदेशतिर स्वदेश भयो शून्य, नेपालकै गीत, संगीतमा कतिले कान थुन्ने संस्कृतिको बिउ जोगाउने थोरै भए युवा, कसले होला मनैदेखि यिनलाई स्याबास भन्ने ?

## ए दलित, ए नेप्टेचेप्टे- अध्यक्ष भएर देखा त ?

केही वर्षअगाडि उद्योग वाणिज्य महासंघको विशेष निमन्त्रणामा मलेसियाका भूपू प्रम महाथिर मोहमद नेपाल आउनुभएको थियो । उहाँले निकै जोड दिएर एउटा कुरा राख्नु भयो । यदि कुनै देशको शान्ति, सुव्यवस्था, विकास, अपनत्व, सुशासन ... सधैँभरि ढुक्कले कायम राख्ने हो भने सबभन्दा पहिले यो या ऊ या कुनै पनि बहाना (यो गोरो छ, यसको दाह्री छ, यो अग्लो छ, यसले अल्ली धेरै पढेको छ, यो मेरो नजिकको जात हो, यसको मेरो भाषा मिल्छ, हाम्रो अनुहार मिल्छ, यो ठूलो जात हो) नराखिकन काम गर्नुपर्छ ।

आज २९% बाहुन, क्षेत्रीमा भन्दा ७०% जनजाति मधेसीहरूमा पढ्नेको संख्या धेरै देखिन्छ । विभिन्न राष्ट्रिय/अन्तर्राष्ट्रिय संघ/संस्थाबाट प्रस्तुत डाटामा झन्, नेवारलाई जातीय सूचांकको अगाडि देखाएको छ । अझ नेवार जातिलाई कतै-कतै नेपालको उच्चतम विकसित समुदाय भनिएको पनि भेटिन्छ । त्यति मात्रै कहाँ हो र यो समुदाय विशेष गरी राजधानीलगायत देशका प्रमुख शहरमा अर्थात् सुविधासम्पन्न केन्द्रमै बसोबास गर्छ तैपनि यिनीहरूको पहुँच (राजनीति, नियुक्ति, अवसर, सुविधा, लोकसेवा, पुलिस, प्रशासनतिर) न बराबर नै देखिन्छ । संघसंस्था, आयोग प्रमुख, सचिव, सेना, पुलिस, प्रशासन सबैतिर ठकुरी, राणा, क्षत्री, बाहुनको हातमा छ ! लोकसेवामा बाहुन क्षेत्री नै हाकिम । मधेसीमा पनि काला काला बिहारीजस्ता भेशभूषा केही मिल्दैन, जात, थर, भाषा मिल्दैन अनि कुन लजिकले लोकसेवा पास गराउने वा नियुक्ति दिलाउने पार्टीको अध्यक्ष र प्रम पनि बाहुन क्षेत्रीको सिण्डिकेटजस्तै छ ।

समावेशीको नाममा अकार्यकारी पदमा जस्तैः राष्ट्रपति, सभामुखजस्ता पद बेला-बेला थमाइदिने गरेको छ । पार्टीमा हद भए उपाध्यक्ष र मन्त्रिमण्डलमा उपप्रधानमन्त्रीसम्म बनाउने चलन ! सुवास नेम्वाङ जिन्दगीभर अध्यक्ष र प्रम बन्न सक्दैनन् । लिङ्देन ज्ञानेन्द्रको चलाखीले आएका हुन् ।

काङ्ग्रेसमा हुने तिनै ठकुरी, कोइराला, बाहुन क्षेत्री नै हुन् ! निधि, धनराज र गोपालमान यी सबै उपाध्यक्षसम्म बनाएर समावेशिता देखाइदिन प्रयोग हुने कोरमे पात्र मात्र हुन् ! माओवादी, माधव, रास्वपामा पनि दूरदूरसम्म मधेसी, जनजातिलाई ठाउँ छैन । भारतका सामाजिक अभियन्ता अन्ना हजारेले भनेजस्तै हामीकहाँ चुनाव जित्न पहिलो टिकेट पाउनुपऱ्यो । ७२% जनजाति भएको देशमा ५% भन्दा बढी दलित, जनजाति र मधिशेको पहुँच नरहनु जस्तो बिडम्ना अरु के हुन्छ ? २०-४०% साक्षर भएका कतिपय अफ्रिकन मुलुक पनि धमाधम जातीय आन्दोलनमार्फत सेटल हुने क्रममा छन् ! हामी पनि समयमै महाथिर मोहम्मदले भन्नुभएअनुसार चल्न सकेनौँ भने आज नभए भोलि स-सानो बहानाबाट देश जातीय आन्दोलनमा नफस्ला भन्न सकिन्न ।


## दूषित पानीका कारण हुने रोगप्रति सजग रहौं

फोहर पानी पिउनाले झाडापखाला, हैजा, टाइफाइड, आउँ, जण्डिसजस्ता रोग लाग्न सक्छ । त्यसैले-

- खोला, धारा वा मुलको पानी सिधै नपिऔं
- पानी उमालेर मात्र पिऔं
- उमाल्न सम्भव नभएमा शुद्धीकरण गरेर मात्र पिऔं
- पिउने पानीलाई सफा भाँडामा छोपेर राखौं र सफा भाँडाले पानी झिक्ने गरौं



नेपाल सरकार
**विज्ञापन बोर्ड**




## मेरो कथा, मेरो व्यथा

हरिजी
priyarasuwa@gmail.com

# करारसँग किन निम्त्याउनुहुन्छ दरार ?

करारका कर्मचारी भनेको मन परुञ्जेल भाँडो मन नपरेपछि ठाँडो हो ? होइन भने किन हेरिन्छ, हेयभावले हामीलाई ? फ्रन्ट डेस्कमा रहेर काम गर्ने, सेवा दिने त हामी नै हौं । हामीलाई राज्यले मात्र होइन, स्थायी नियुक्ति खाएका, कर्मचारीका नेताहरूले नै हेप्ने वा चेप्ने गर्छन्, गर्दै आएका छन् तर उनीहरू बढुवातर्फ केन्द्रित रही रातदिन लोकसेवा तयारी गरिरहँदा, अध्ययन बिदामा बसिरहँदा ग्राउण्ड लेबलमा बसेर कसले गरिरहेछ जनताको काम ?

बनेपा नयाँबस्ती-९ मा जन्मिएँ, हुर्किएँ । स्कूले शिक्षा काभ्रे बनेपा पञ्चकुमारीबाट पूरा गरेपछि छिरेको हुँ काठमाडौं । सरस्वती क्याम्पस, ठमेलको विद्यार्थी । होमिएँ अखिल क्रान्तिकारीमा जोडिएर विद्यार्थी राजनीतिमा । तत्कालीन स्ववियु सभापति विना मगरलाई जिताउन मैदानमा खटिएँ । लडेर घाइते पनि भइयो । त्यसयता उक्त संगठनको केन्द्रीय भूमिकामा रहेर काम गरें । ०७३ सालमै प्रवेश गरेको हुँ करारसेवामा । प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयमा कार्यरत छु, सात वर्षदेखि । यहाँ करार सेवाकै कर्मचारी ७५ जना छौं । कम्प्युटर अपरेटर ९, कार्यालय सहयोगी ४०, ड्राइभर २५ जना । सिंहदरबारभित्रका प्रायः मन्त्रालयमा कम्तीमा २२ देखि २५ कर्मचारी करार सेवाकै छन् ।

बीचमा प्रधानमन्त्री कार्यालयको नयाँ भवन बन्यो । भवन जतिसुकै भव्य भए पनि हाम्रो दुःख, पीडा र दर्द उस्तै छ । सात वर्षको यो अवधिमा अनेकन विभेद भोगियो, देखियो । त्यही विभेद अन्त्यका लागि भन्दै जोडिएँ ०७६ सालमै अखिल नेपाल सरकारी अस्थायी करार तथा ज्यालादारी कर्मचारी श्रमिक संघमा । भन्छन् नि एक थुकी सुकी, हजार थुकी नदी । जब संगठनमा आबद्ध भएँ, ज्यादतीविरुद्ध बोल्न थालें, सह्य भएन कतिपयलाई । अध्यक्ष थिइन् विमला आचार्य, मैले सचिव भएर एक कार्यकाल चलाएँ । ०७९ भदौ ३ मा राष्ट्रिय सम्मेलनपछि संगठनको उपमहासचिव छु । अध्यक्ष हुनुहुन्छ, काशिराम श्रेष्ठ, नेपाल ट्रष्टको कार्यालयमा कार्यरत । महासचिवको जिम्मेवारी यदुनाथ न्यौपानेको काँधमा छ । उहाँ सडक विभागमा हुनुहुन्छ ।

हरेक वर्ष असार मास लागेपछि करार सेवामा कार्यरत कर्मचारीको मुटुको ढुकढुकी बढ्छ । मन्त्री, सचिवदेखि कार्यालय प्रमुखको इन्टेसन हुन्छ, आ- आफ्नो मान्छेलाई करार सेवामा छिराउने । त्यही कारण कतिपय कार्यालय प्रमुखहरू दरबन्दी खाली गर भन्छन् । कार्यालय सहयोगी, सवारी चालक, हल्कारा, मालीलगायत पदमा जीवनका ३०औं वर्ष बिताएर रित्तो हात बिदा हुनुपर्ने हाम्रो पीडा कसले देख्ने ? प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयमा ७५ जना कार्यालय सहयोगी र ड्राइभर करारतर्फ छन् । श्रमिकको हक हित र सुरक्षा जिम्मेवारी बोकेको श्रम तथा रोजगार मन्त्रालयमै ४२ जना ड्राइभर र कार्यालय सहयोगी करार सेवामै छन् । स्वास्थ्य मन्त्रालयमा मात्रै यस्ता झण्डै २५० बढी छन् । यसरी जीवनका ऊर्जाशील समय करार सेवामा बिताएर रित्तो हात बिदा हुनुपर्दाको पीडा भोग्नेलाई मात्र थाहा हुन्छ । जस्तो रेडियो नेपालमा कार्यरत चाँदनी मोक्तानले जन्माएका सयौं व्यक्ति अहिले राष्ट्रिय कलाकारका रूपमा परिचित छन् । उहाँ ७० वर्ष भइसक्नुभएको थियो । त्यही बेला रेडियो नेपालले ५८ वर्षे उमेर हद ल्यायो । जीवनको ३० वर्ष काम गरिसक्नुभएकी, आमासमान वृद्धालाई अपमानजनक ढंगबाट निश्कासन गर्न खोजेपछि हामीले तत्कालीन निर्देशक बुद्धि केसीलाई भेटेर कुरा राख्यौं । यसो गर्दा तपाईंको मन शान्त हुन्छ त ? भनेर प्रश्न राख्यौं । त्यसपछि उहाँलाई रेडियो नेपालले स-सम्मान बिदाइ गऱ्यो । यस्तै रेडियो नेपालमा २८ वर्ष सेवा गरिसकेका खड्ग गन्धर्व अहिले मुन्द्रेको कमेडी क्लबमा काम गरिरहनुभएको छ । अहिले पनि संघमा १४ हजार कर्मचारी करार सेवाका छन् । स्थानीय तहमा ३५ हजार र प्रदेशमा ८ हजार छन् ।

संघीय निजामती सेवा ऐनबारे अहिले प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयमा दफावार छलफल चलिरहेको छ । यसरी करार सेवामा कार्यरत कर्मचारीलाई उमेर हद नलाग्ने गरी आन्तरिक प्रतिस्पर्धा खुलाई स्थायी नियुक्ति गरिनुपर्छ भन्ने हाम्रो पहिलो माग छ । केपी शर्मा ओली प्रधानमन्त्री हुँदा निकै तामझामसाथ योगदानमा आधारित सामाजिक सुरक्षा कार्यक्रम शुरु भयो, त्यो पनि निजी क्षेत्रतिर मात्र । सरकारी सेवामा अझै पनि यो व्यवस्थाा लागु हुन सकेको छैन । करार सेवामा कार्यरत कर्मचारीलाई

**आमासमान वृद्धालाई अपमानजनक ढंगबाट निश्कासन गर्न खोजेपछि हामीले भेटेर कुरा राख्यौं । रेडियो नेपालमा २८ वर्ष सेवा गरिसकेका खड्ग गन्धर्व अहिले मुन्द्रेको कमेडी क्लबमा काम गरिरहनुभएको छ ।**

कुनै पनि हालतमा सामाजिक सुरक्षा कोषमा आबद्ध गराइनुपर्छ । अहिले श्रम मन्त्रालयको सहसचिव डण्डुराज घिमिरेको संयोजकत्वमा कार्यविधि बन्दै छ । विवाद छ शुरु सेवालाई आधार मान्ने वा आधारभूत ? शुरु सेवा २४ हजार र आधारभूत तलब १७ हजार ३ सय तोकिएको छ । आधारभूतबाट लाने कि शुरु सेवाबाट लाने भन्नेमा समिति अल्झिरहेको छ । श्रम मन्त्रालयमा कार्यविधि बन्दै छ । करार सेवाका कर्मचारीलाई चाँडै सामाजिक सुरक्षा कोषमा जोड्नुपर्छ । यसमा श्रम मन्त्रालयले विशेष भूमिका खेल्नेछ । अर्थका मन्त्री, सचिवलाई घुमाउँछन् त्यहाँका सहसचिवहरूले । करार सेवाका कर्मचारीको हकहितका लागि अनेकन कार्यविधि बन्छ । तर, अर्थमा पुगेपछि त्यहाँका सहसचिवहरूले घुमाइदिने गरेको पाइएको छ । किन हामी करार सेवाका कर्मचारीलाई दोस्रो दर्जाको नागरिक बनाइरहेको छ, राज्य ? सरकारले करार, अस्थायी, ज्यालादारी कर्मचारीको न रोजगारीको ग्यारेन्टी गर्न सकेको छ न त कुनै किसिमको भत्ताकै व्यवस्था । बरु कहिले उमेरको हदबन्दी त कहिले कासमूको नाममा तर्साउने काम हुँदै छ । पेपरमा नियुक्ति पाउनेलाई किन सामाजिक सुरक्षा भत्ता दिने, किन महँगी भत्ता दिने ? भन्दै हाम्रो खिलाफमा बोलिन्छ । ०७४ वैशाख २३ देखि करारको कर्मचारीले पनि पोशाक भत्ता, चाडवाड खर्च पाउन थालेका छन्, यो तत्कालीन प्रचण्ड सरकारकै देन हो । केपी ओली सरकारले बरु बजेटमा बढाइएको महँगी भत्ता २ हजारले कटौती गरेको छ । के हाम्रोचाहिँ पेट छैन ? कि हाम्रा बालबच्चा छैनन् ? किन स्थायी कर्मचारी र हामीमा सौतेनी व्यवहार ? आफूलाई कम्युनिष्ट भन्ने, सर्वहारा, श्रमिकका नेता भनिनेहरू सत्तामा हुँदा हामी करारका कर्मचारीले पाउँदै आएको महँगी भत्ता कटौतीमा पर्नु दुःखद् कुरा हो ।

कतिपय ट्रेड युनियनका नेता नै 'फुटाऊ र राज गर'मा लागेका छन् । अस्थायी, करार र ज्यालादारी कर्मचारीको खिलाफमा छन् ट्रेड युनियनका नेताहरू । हाम्रो मत नपाउने भएरै होला उहाँहरू हामीप्रति यतिबिघ्न नकारात्मक हुनुभएको । दिलको कुनामा लेखेर राखेका छौं, कुन-कुन ट्रेड युनियनका नेताले कतिसम्म बिभन्ने गरी शब्द वाणले हामीलाई प्रहार गर्नुभएको छ । उहाँहरू पनि कर्मचारी युनियनका आडमा कहाँ कसरी खेलोफड्को गर्नुहुन्छ त्यो हामीले टिपोट गरेर राखेका छौं ।

किनकि हामीलाई ट्रेड युनियनको निर्वाचनमा मतदानको अधिकार छैन । त्यही कारण देशैभरका अस्थायी, करार, ज्यालादारी कर्मचारी अटाउने एक मात्र छाता संगठन हो यो । यसमा आबद्ध साथीहरूलाई समेत छिन्नभिन्न बनाउन उद्यत छन्, केही ट्रेड युनियनकर्मी नेता । स्थायी संगठनले प्रयोग मात्र गर्छन् । वर्गको हिसाबले । संगठित नहुँदा जसले पनि खेल्ने गर्छ । राकस, युनियनलगायत संगठनका नेता मीठै कुरा गर्नुहुन्छ । हामीलाई प्रयोग गर्नुहुन्छ तर हाम्रो संगठन छिन्नभिन्न बनाएर खेलिरहनुभएको छ ।

अहिले अस्तित्वमा रहेका आधिकारिक ट्रेड युनियन, नेपाल निजामती कर्मचारी संगठन, निजामती कर्मचारी संगठन (युनियन), नेपाल राष्ट्रिय कर्मचारी संगठन निजामती, एकीकृत सरकारी कर्मचारी संगठन, मधेसी कर्मचारी मञ्चभन्दा संगठनको हिसाबले हामी कमजोर छैनौं । सातै वटा प्रदेशमा संगठन छ । झण्डै स्थायी कर्मचारीकै हाराहारीमा सरकारी अस्थायी, करार, ज्यालादारी श्रमिक सेवामा छौं । ६० हजार अस्थायी, करार, ज्यालादारी कर्मचारीलाई लिड गर्ने यो संस्थाको पहिलो अध्यक्ष राजन कार्की, त्यसपछि भुपाल रसाइली र तेस्रो अध्यक्षको रूपमा विमला आचार्य हुनुभयो । अहिले चौथो अध्यक्ष काशिराम श्रेष्ठ हुनुहुन्छ । मुलुकको प्रशासन संयन्त्र ७५ प्रतिशत करारकै कर्मचारीले धानेका छन् तर यिनैमाथि हुने सौतेनी व्यवहार कुनै हालतमा सह्य छैन /हुँदैन ।

सर्वोच्च अदालतले ०७० माघ ९ गते अस्थायी, करार तथा ज्यालादारी कर्मचारीलाई राहत पुग्ने गरी सरकारको नाममा जारी गरेको निर्देशनात्मक आदेश र सोपछि मन्त्रिपरिषद्बाट २०७४ वैशाख २१ गते कानुन बनाई अस्थायी, करार तथा ज्यालादारी कर्मचारीको माग सम्बोधन गर्ने निर्णयको खै कार्यान्वयन ? श्रम ऐनअनुसार २४० दिन काम गरेका कर्मचारीलाई स्थायी गर्ने कहिले ? संगठन र करार कर्मचारीको हितमा जेल जान, प्राणआहुती दिन हिँडेको सिपाही हुँ । हाम्रा माग समयमा सम्बोधन होस्, राज्यको ध्यानाकर्षण गराउन चाहन्छु ।

*- भवनाथ सापकोटा, अखिल नेपाल सरकारी अस्थायी, करार तथा ज्यालादारी कर्मचारी श्रमिक संघ*



## जीवनको रंग

हरि गजुरेल

# विदेशीसँग धमाधम वैवाहिक बन्धनमा बाँधिँदै

झरना बज्राचार्य, विपना थापा, हर्षिका श्रेष्ठको पथ पच्छ्याउँदै अर्की नायिकाले भारतीय युवकलाई दुलाहा रोजेकी छन् । विदेशी नागरिकलाई दुलहा बनाउनेको भीडमा थपिएकी छन् निरुता सिंह, उनले भदौ १४ मा मुम्बई निवासी सञ्जिव गुलाटीलाई जीवनसाथीका रूपमा रोजेकी हुन् । ०५० को दशकदेखि 'दक्षिणा' बाट नेपाली सिने क्षेत्रमा पाइला राखेकी निरुताले मनमन्दिर, दर्पण छायाँ, बन्धकी, दुई किनारा, दुःख, आमाको काख, आफन्त, माइती, माइली, सन्तान थरीथरीका, लहनालगायत चलचित्रमा अभिनय गरेर नेपाली दर्शकको मन जितिन् ।

नेपाली सिने नगरीबाट पलायन भएर भारत पुगेकी उनले इन्टेरियर डिजाइनरको काम गर्दै आएको बताइन्छ । लामो समयदेखि भारतमा बस्दै आएकी निरुताले मुम्बईका सञ्जिबलाई जीवनसाथी रोजेकी हुन् । उसो त यसअघि नै विपना थापा, हर्षिका श्रेष्ठहरूले भारतीय व्यापारीलाई जीवनसाथी रोजिसकेका थिए । विपनाले डा.आशुतोष भारद्वाजसँग ०६३ सालमै लगनगाँठो कसेर भारतलाई कर्मघर र नेपाललाई माइतीघर बनाएकी थिइन् ।

यस्तै, भारतीय व्यापारी प्रशुन झुनझुनवालासँग हर्षिका श्रेष्ठले विवाह गरेकी छन् । यस्तै पूर्व मिस नेपाल तथा अभिनेत्री झरना बज्राचार्यले भारतीय मूलका मलेसियन नागरिक राहुल अग्रवालसँग विवाह गरेकी छन् । उसो त नेपाली



सिने नगरीमा सबैभन्दा पहिला विदेशी नागरिकसँग लगनगाँठो कस्ने नायिका मानिन्छ चैत्यदेवीलाई । चलचित्र कुमारीकी अभिनेत्री चैत्यदेवीले जापानी युवकसँग विवाह गरेकी थिइन् । उसो त अधिकांश नायिकाले धनाढ्य व्यापारी वा विदेशी व्यापारी र एनआरएनवालालाई रोज्दै आएका छन् । झोला चलचित्रमा काम गरेर दर्शकको मन जितेकी गरिमा पन्तले बेल्जियमका एनआरएनवाला डिभोर्सी हरि शर्मा थपलियालाई जीवनसाथी रोजेपछि उतै गुमनाम छिन् । यस्तै अभिनेत्री तथा मोडल सिम्पल खनालले पनि दोस्रो विवाह विदेशीसँगै गरिन् । नेपाली नागरिक अर्थात् म्युजिक भिडियो निर्देशक प्रशन्न पौड्यालसँगको घरजममा जम्न नसकेपछि बेलायत बसोबास गर्ने पाकिस्तानी मूलका व्यवसायी नदिमसँग विवाह गरेर उनी पनि बेलायततिरै बसाइँ सरिन् । यस्तै नायिका रेजिना उप्रेती बेलायतमा लामो समयदेखि बस्दै आएका नेपाली युवक सुरजसँग विवाह बन्धनमा बाँधिएकी थिइन् । विदेशी विवाह गर्नेमा अभिनेता र निर्देशक आकाश अधिकारी पनि थपिएका छन्, उनले इटलियन नागरिकलाई नेपाली बुहारी बनाएर भित्र्याएका छन् ।

यस्तै युना उप्रेती अमेरिकाकै एनआरएनवाला विकास अधिकारीसँग घरजम गरेर उतै पलायन भइन् । कतिपय नायिकाहरूको हकमा जीवनसाथी फेर्नु र लुगा फेर्नु उस्तैजस्तो देखिएको छ । कुनै बेला आदर्श जोडी भएका र दशकौं एक रथका दुई पांग्रा जसरी जीवनका सुख दुखः सँगै बिताएकाहरू धमाधम छुट्टिने पनि उत्तिकै छन् । नायिका उषा पौडेल नायक सुधांशु जोशीसँग विवाह बन्धनमा बाँधिइन् । अमेरिकामा बस्दै आएका सुधांशुले उषासँग दोस्रो बिहे गरेका हुन् । तर, सम्बन्ध अगाडि बढ्न सकेन । उही स्थिति रह्यो, अरुणिमा लम्सालको । कुनै समय धड्कन, अग्नि ज्वाला, अभिमन्यू, इन्द्रेणी, के यो माया हो' लगायत ५० बढी फिल्ममा अभिनय गरिसकेकी उनी अमेरिका निवासी अमित अर्यालसँग विवाह बन्धनमा बाँधिइन् तर उक्त सम्बन्ध उषा पौडेलको झैं दिगो हुन सकेन ।

## टेकनाथको....

उताका राजाको कानूनले कसुर ठहर गरे पनि यताको राजनीतिक परिस्थितिमा आएको फेरबदललाई उनले विश्वास गरेको हुनुपर्छ । भुटानी जेलबाट नेपाल झरेका रिजाल दुई दशकसम्म नेपालको खुला कैदी जीवनपछि साँच्चिकै कैदखानाभित्र पुऱ्याइएका छन् । हिजोसम्म विश्व परिचित मानवाधिकार आन्दोलनका यी मसिहाको पक्षमा अब बोलिदिने कोही बाँकी छैनन् ।

सिध्दान्ततः कुनै व्यक्तिको मानवअधिकार अहरणीय हुन्छ र आफूलाई सफाइ दिने पूर्ण अधिकार हुन्छ । नेपाल सरकारले राज्यविरुद्धको अभियोग लगाएको राज्यविहिन नागरिकका पक्षमा नेपाली कानून व्यवसायीले बहस पैरवी गर्न पाउँछन् कि पाउँदैनन् ? न्यायको सिध्दान्त र अभ्यासमा यस्तो प्रश्न नहोला तर प्रकारान्तरले टेकनाथ एकपछि अर्को जटिलताको भुमरीमा परिरहेको देखिन्छ । 'न टेक्ने, न समाउने' यो अवस्थामा उनी किन पुगे ?

भुटानी राजाबाट पाउन पर्ने इनाम र भुक्तमानको अधिकतम हात पारेका रिजालले विश्व समुदायले गरेको सम्मान र विश्वासलाई जीवनको उत्तरार्धमा आएर कसका लागि दाउमा राखे होलान् ? श्रीमती कौशिलाको कुनै माग र गुनासो पुरा गर्नुपर्ने बाध्यता पनि थिएन । कुनै गुनासो बिना टेकनाथको सहारा बनेकी ६६ वर्षिया कौशिला नियतिले डोहोऱ्याएर यहाँसम्म ल्याइपुऱ्याएको बाहेक अरु कसैलाई दोष दिन चाहन्नन् ।

आफ्नै छोराहरूले विकसित देशको बास रोजेकोमा चित्त नबुझाएका टेकनाथको उद्देश्य सक्कली भुटानी शरणार्थीलाई नै पनि विकसित देशमा पुनर्वास गराउने होइन । उनको एक मात्र अर्जुन दृष्टि थियो- नेपालको शरणार्थी क्याम्पमा रहेका नागरिकहरूलाई ससम्मान भुटान फर्काउने । उनैले भुटानी शरणार्थीका नाममा नक्कली भुटानी खडा गरेर आर्थिक चलखेल गरेको र केही लाख रुपियाँ लिएको कुनै प्रमाण र पुष्टि हुँदैन । बरू नेपाल सरकारले कबुल गरेबमोजिम उनलाई दिनुपर्ने दुई दशक यताको करिव २ करोड रूपैयाँको बक्यौता देखिन्छ । नेपाल सरकारले गठन गरेको आयोग र यसैको आडमा नक्कली शरणार्थीका नाममा आर्थिक चलखेल शुरु गरेका बिचौलियाहरूले रिजाललाई बाँकी शरणार्थीका समस्या समाधन, पुनर्वास र भुटान फिर्ताका लागि हामी काम गर्दैछौं भनेर केही अनधिकृत सहयोगका निम्ति बाध्य पारेको देखिन्छ । अभिलेखमा छुटेका भुटानी हुन् भन्दै रिजालको नेतृत्वमा रहेको मानवअधिकार संस्थाको सदस्यता दिलाएर नेपाली नागरिकलाई भुटानी प्रमाणित गराउने प्रयास आयोग वा बिचौलियाहरूले गरेका छन् । उनका आफन्त, सचिवालयका मानिसहरू बनेर सर्वसाधारणलाई भ्रममा पारेका छन् । रिजाललाई हामी राज्य(सरकार) का प्रतिनिधि हौं, तपाईंको दुःख सुखमा साथ दिन्छौं भनेर सरसापटी दिई वा सानोतिनो गर्जो टारिदिँदै नक्कली प्रकरणमा आइपर्न सक्ने अडचनमा लेनदेनको प्रमाण जुटाउने उद्देश्यले ती कारोबारको अभिलेख अघि सारेका हुन् । केही लाखको लालचमा ७६ वर्षीय यी बृद्धले जीवन पर्यन्तको प्रतिष्ठा राखेका होइनन् ।

गणतन्त्र स्थापनापछिको नेपाल सरकार (मन्त्रिपरिषद्) ले २०६२-६३ सालतिर नै रिजाललाई जीपनयापनका निम्ति वार्षिक १२ लाख रूपैयाँ, एउटा गाडी र एक जना सहायकसहितको सुविधा उपलब्ध गराउने निर्णय गरेको थियो । तर त्यो सुविधा नियमित पाउन सकेनन् । पटक पटक धेरै नेताहरूका घरदैलोमा धाएपछि कहिले कुनै बर्षको एकमुष्ट वा कतिपय वर्ष उनले त्यो रकमको आश मात्र गर्नु पऱ्यो, हात परेन । कहिले उनी कराइ चुल्होमा बसाएर तेल खोज्न हिंडे भने कहिले तरकारी केलाएर चामल जम्मा गर्न निस्के । तर जीविकाका लागि खटाउँदै र कटाउँदै पाएको त्यही रकममा पनि सञ्चारमाध्यमहरूले बक्रदृष्टि लाउन थालेपछि वक्तव्य नै निकालेका थिए- 'टेकनाथ रिजालले राज्यबाट र शरणार्थीका नाममा लाखौं रूपैयाँ लिइरहेको छ भनेर जनमानसमा भ्रम फैलाउने काम जे जसरी भएको छ, त्यो निन्दनीय छ, अन्यायपूर्ण छ ।' नक्कली शरणार्थी प्रकरण सतहमा आउनु पहिले नै उनले नेताहरू र प्रहरीलाईसमेत भेटेर र लेखेर पनि जानकारी गराएका थिए,भुटानी शरणार्थीहरूका नाममा बिचौलियाहरूको चलखेल भइरहेको छ । भुटानी शरणार्थीहरूलाई पुनर्वासका लागि जहाज चढाएर नेपालको आकाशमा उडाउन थालेको देख्दा भावविह्वल हुँदै टेकनाथले भनेका थिए- 'यो जन्ममा मेरा इष्ट मित्र, साथीभाइहरू जो जसले मबाट जेजस्तो आशा गरेका थिए, त्यो यो जन्ममा पुरा गर्न सकिन । मेरो बाध्यतालाई बुझेर हृदयबाट नै माफ गरिदिनु होला । आमाबाबु र पितृ वा इश्वर जे भने पनि भुटान नै हो मेरालागि ।'

आफ्ना देशका नगरिकलाई देश निकाला गरेर विश्वका खुशी नागरिकको कथित ताज ओढेको भुटान सरकारले अहिलेको शरणार्थी समस्यालाई भोलि कसरी परिभाषित गर्छ ? त्यसको अन्तर्राष्ट्रियकरण र आफ्ना भावी सन्ततीलाई इतिहास कसरी पढाउँछ ? त्यसको आकलन गुगल सर्चहरूमा ५० वर्षपछि म कस्तो देखिन्छु भनेर 'फोटोसप'मा आफ्नो अनुहार खोजेजस्तो गरी फेला पर्दैन । तर आश्चर्य मान्नु पर्दैन भोलि भुटानले यो सन्देश सार्वजनिक गऱ्यो भने 'सन् २००० को दशकमा प्रजावत्सल भुटानी राजाको लोकप्रियता र भुटानको विकासले आकर्षित भएर भारतको बाटो हुँदै दक्षिण भुटान छिर्न अनधिकृत प्रयास गर्ने पूर्वी नेपालको खोला किनार र जङ्गलहरूमा बसोबास गरिरहेका करिब १ लाख नेपालीहरूलाई भुटान सरकारले रोकेको थियो ।' भुटान सरकारले आगामी केही वर्षपछिका लागि यस 'न्यारेसन'को विभिन्न भाषामा अनुवाद शुरु गरिसकेको हुनसक्छ !

इतिहास जित्नेको मात्र लेखिन्छ भन्छन् तर हारेर पनि नहार्नेको इतिहासमा लेखिने नाम हो टेकनाथ रिजाल । जाति र भाषाका लागि लडेका यी जिउँदा शहिद र असफल यिनै टेकनाथकै लागि त लेखेका थिएनन् बालकृष्ण समले यी पंक्ति !

*दुःखीको घरमा मात्र तेरो बास हुने भए,*
*हे ईश्वर ! दया राखी मलाई अझै दुःख दे ।*

## सात...

चढ्न ज्ञवालीले सुझाएका थिए । ज्ञवालीको भनाइ थियो, 'मचाहिँ हिँड्नै रूचाउँछु । अम्बास गाउँका दृश्यले रोमाञ्चित बनायो ।' ज्ञवालीको पछिपछि एक हुल कार्यकर्ता लामबद्ध भएर हिँडिरहेका थिए ।

**माओवादीको बाटोमा एमाले**

मदन भण्डारी महासचिव बनेको अम्बासको विकास भनेको सर्रे खोलामा बनेको २ वटा झोलुंगे पुल हो । मदन भण्डारी मावि निर्माणाधीन अवस्थामा छ र महेन्द्र राजमार्गको जिरोमाइलबाट अम्बाससम्म पुग्ने १३ किमि कालेपत्रे सडक पनि बन्ने क्रममै छ । अम्बासबाट उदयपुरको मदन भण्डारी मार्ग जोड्ने सडकको ट्र्याक भर्खरै स्थानीयले जनही घरधुरी ५ हजार रूपैयाँको दरले उठाएर खोलेका छन् । तत्कालीन मालेको चौथो महाधिवेशनस्थलसम्म पुग्ने ग्रामीण कच्ची बाटो बनेको छ । यो बाटो माओवादी केन्द्रको केन्द्रीय सदस्यसमेत रहेका धनगढीमाई नगरपालिकाका तत्कालीन मेयर हरिनारायण चौधरीले बनाएका हुन् । जुन बाटो हुँदै एमालेका सबैजसो शीर्ष नेता बैठकस्थल पुगे । एक स्थानीय भन्दै थिए, ' माओवादीले बनाएको बाटोमा एमाले हिँड्यो ।'

अहिले भने धनगढीमाई नगरपालिकाको मेयर एमालेले जिते पनि अम्बासको विकासमा खासै चासो दिइएको छैन । स्थानीय बाटो, तटबन्ध, कुलोपैनी र मदन भण्डारी स्मारक पार्क बनेर यो ठाउँ पर्यटकीयस्थल बनेको हेर्न चाहन्छन् । उनीहरूले अम्बास भ्रमणमा आएकी मदनपत्नी विद्यादेवी भण्डारी, नेकपा समाजवादीका अध्यक्ष माधवकुमार नेपाल र शंकर पोखरेलसँग पनि यिनै माग राखेको धेरै भइसक्यो । तर, सुनुवाइ भएन । यसपटक ओलीसमक्ष यही माग राखेका छन्, सबैले । मोबाइलको टावरसमेत नलाग्ने अम्बासबासीको यो माग पूरा गर्ने प्रतिबद्धता एमाले नेतृत्वले गरेको छ । सधैँ प्रतिबद्धता जनाउने तर पूरा नगर्ने परिपाटीकै कारण सधैँ एमालेले जित्दै आएको अम्बासमा पछिल्लो स्थानीय तह चुनावमा वडाध्यक्ष कांग्रेसले जितेको तीतो यथार्थ स्मरण गरे स्थानीय ८० वर्षीय बलबहादुर सुनुवारले । चौथो महाधिवेशनका लागि घरै उपलब्ध गराएका बलबहादुरले डेढ बिघाभन्दा बढी जग्गा दिएका छन् ।

**फोटा खिच्नेको ताँती, मञ्चमा बस्न रोक**

बुधबार टाँडमा सचिवालय बैठक बसिरहँदा छेवैमा रहेको आफ्नो घरको आँगनमा रहेको आँपको रुखमुनि जनआस्थासँग निकैबेर गफिए बलबहादुर । उनी कान लगभग सुन्दैनन् । प्रेसर र थाइराइडका बिरामी लौरो नटेकी हिँडडुल गर्न सक्दैनन् । काठमाडौं गएर ठूलै अस्पतालमा कान जँचाउने र औषधोपचार गर्ने धोको छ । तर, अभावले गर्दा धोको अधुरै छ । मालेकालीन भूमिगत नेता उनका कान्छाभाइ पनि औषधोपचार अभावमा अकालमै मरेका थिए । एमाले मदन भण्डारीले देखाएको बाटोमा नहिँडेको भन्दै चित्त दुखाए, 'एमाले नेतृत्व व्यक्तिवादी भयो । सबै पैसाको पछि लागे । घरघडेरी जोड्नतिर लागे । मै खाउँ मै लाऊँ भन्नेमा जोड दिन थाले । जनभावनाको कदर गर्न छाडे । भ्रष्टाचारमा मुछिए । मदन भण्डारीले भनेको सर्वहाराको मुक्ति यो छाँटले कसरी होला र खै !'

अर्को दृश्य त झन् हृदयविदारक छ । जनआस्थासँग कुराकानी टुंगिन नपाउँदै लिन आइपुगेकी कान्छी छोरीको भरमा लौरो टेक्दै बैठकस्थल पुगेका बलबहादुरसँग ऐतिहासिक घरअगाडि उभिएर फोटा खिच्नेको लर्को लाग्यो । करिब आधा घण्टासम्म लौरो टेकेर पोज दिइरहँदा उनी थरथर काँप्दै थिए । उनको दर्दतिर कसैको चासो थिएन । सुटेडबुटेड नेताहरू थरीथरी पोज दिइरहेका थिए । धेरैबेरसम्म उभिनुपरेकाले बलबहादुरको अनुहार कालोनीलो बनेको थियो ।

धेरैबेरको फोटो सुटपछि छोरीचेलीले पाखुरा पक्रिएर मञ्चतिर बसाउन लगे । सुरक्षामा तैनाथ प्रहरीले आदेश नभएको भन्दै मञ्चमा बसाउन मानेनन् । उनकी छोरीले बैठक बसिरहेको घर देखाउँदै भनिन्, 'यो घर दिने मान्छे उहाँ नै हो ।' प्रहरीले भने, 'खै त्यो त थाहा भएन । मञ्चमा मान्छे राख्ने आदेश छैन ।' स्वयंसेवकले कुर्सी खोजेर ल्याए । अप्ठ्यारो मानिमानी बलबहादुर मञ्चमा बसे । अघिल्तिर टेण्टको ओतमा बसेका केन्द्रीय सदस्यहरू यो दृश्य हेरिरहेका थिए । माइकमा जोरजोरले गीत घन्किरहेको थियो, 'गाउँगाउँबाट उठ, बस्तीबस्तीबाट उठ - यो देशको मुहार फेर्नलाई उठ ...।'

भदौ १३ गते मदन र माधवलाई आश्रय दिएकोमा सम्मानित हुँदै गर्दा राजकुमार घिमिरे भक्कानिए । मदन भण्डारीको नाम बेचेर खाएको भन्दै एमाले नेतृत्वको सत्तोसराप गरे । घिमिरेसँगै चौथो महाधिवेशनका मुख्य व्यवस्थापक ईश्वर पोखरेल, व्यवस्थापन सदस्यहरू सत्यनारायण मण्डल, नरेन्द्र पोखरेल र हिराबहादुर सुनुवारलाई पनि सम्मान गरियो । ईश्वर पोखरेलले अनियमितता गरेको पैसा खानेपानीको ट्यांकीमा लुकाएको चर्चा अखबारहरूमा छाइरहँदा औषधोपचार अभावमा हीराबहादुर सुनुवारको निधन भने उदयपुरको गराँसमा भएको थियो ।

त्यस्तै, भदौ १३ गते अम्बासमा तत्कालीन मालेको महाधिवेशनमा विशेष भूमिका निर्वाह गर्ने गिरीधारी मैनाली, रामईश्वर शाह, शिवदयाल बिक, स्वर्गीय नरेशचन्द्र उराव, तेजप्रसाद तिमल्सिना, नारायण गेलाल, हिकबहादुर लुंगेली, तुलसी आचार्य, हरिहर उपाध्याय, हरिप्रसाद लामा, चौधरी महतोलाई सम्मान गरिएको थियो ।

अम्बाससँगै जोडिएको विष्णुपुरका चौधरीको घरमा मदन महिनौँसम्म बस्थे । चौधरीसँगै खैनी मोल्दै गाउँ डुल्थे । ०४६ सालमा चौथो महाधिवेशन हुनुअघि तत्कालीन मालेको केन्द्रीय कमिटी मिटिङ विष्णुपुरस्थित चौधरीको घरमा बसेको थियो । महाधिवेशनका लागि लहानबाट चौधरीले ३० किलो आलु बोक्दा मदन भण्डारीले २० किलो चिनी बोकेको चौधरीले बताए ।

त्यस्तै, सोही दिन चौथो महाधिवेशन सफल बनाउन भूमिका निभाएको भन्दै कमलबहादुर जर्घा, स्वर्गीय पूर्णबहादुर जर्घा, मदनबहादुर जर्घा, स्वर्गीय वीरबहादुर सुनुवार, गुणबहादुर सुनुवार, इमानसिहं मसरांगी, जितबहादुर सुनुवार, भीमबहादुर मगर, स्वर्गीय रामकरण महतो, स्वर्गीय वैकुण्ठ निरौला र विराटनगरको एमएम प्लास्टिक उद्योगलाई सम्मान गरिएको थियो । सचिवालय बैठकमा भाग लिन काठमाडौंबाट प्लेनमा जनकपुर हुँदै आएका नेतागण प्लेनमै फर्किनुपर्ने भएकाले हतारमा थिए । बैठकस्थलबाट फर्कने क्रममा लहानस्थित चौधरी आँखा अस्पताल छिरे ओली । अहिले यस अस्पतालले ओलीले समेत आँखा चेक गराएको अस्पताल भनेर सीमावर्ती भारतीय क्षेत्रमा प्रचारप्रसार तीव्र बनाएको छ ।

*- सन्तोष बराइली*

## देशबाट भागेर पनि विदेशीको दूत

सर्वसाधारणको १० अर्ब निक्षेपमाथि खेलबाड गर्दै ललितपुरस्थित सुमेरु सहकारीका सञ्चालक भरत महर्जन देश छाडेर बेलायत गइसके । तर, उनी अझै पनि बोत्स्वानाको महावाणिज्यदूतका रूपमा बहाल छन् । विभिन्न सञ्चारमाध्यमका समाचारमा उनको बदमासी छरपष्ट छ । तर, औपचारिक रूपमा कुनै उजुरी नपर्दा परराष्ट्र मन्त्रालयले गृहसँग मौखिक सरोकारमात्रै राखेको छ । बरु, केही देशका निम्ति अवैतनिक महावाणिज्यदूत नियुक्ति प्रक्रिया चलिरहेको छ । जोर्डनका लागि चार्टर्ड एकाउन्टेण्ट रहेका कुनाल कयालको नियुक्ति प्रक्रिया अगाडि बढेको छ । त्यस्तै, म्याद सकिने महावाणिज्यदूतहरूको नवीकरण पनि भइरहेको छ । दक्षिण अष्ट्रेलियाका लागि दीपक धमलासहित मेलबर्न, ब्रिस्बेन, कोस्टारिका, स्वीडेनका लागि अवैतनिक महावाणिज्यदूतहरूको अवधि सकिएपछि नवीकरणको काम अगाडि बढेको छ । अष्ट्रेलियाकै भिक्टोरियाका लागि चन्द्र योञ्जनको कार्यकाल पनि थप हुने भएको छ । उता, नेपालमा मन्त्री बन्ने भएपछि रसियाका लागि अवैतनिक महावाणिज्यदूत रहेका डा.वीरेन्द्र महतोले राजीनामा दिएसँगै त्यो पद रिक्त छ । त्यस्तै, अदालतको आदेशबाट उपसचिवमा बढुवा भएका चक्र सुवेदी विदेशी दूतावासहरूलाई भिसाका निम्ति पत्र लेख्ने कन्सुलर विभागको निर्देशकमा जोडजुलुम लगाएर पठाइएका छन् । त्यहाँ जानका लागि उनले भएभरको राजनीतिक शक्ति प्रयोग गरेका थिए ।

## मापदण्डमाथि हप्ता दिनमै मारमुङ्ग्री

मापदण्ड बन्छ, एक हप्तामै त्यसमाथि मारमुंग्री चल्छ । प्रहरी कर्मचारीको सरुवासम्बन्धी मापदण्ड- २०७९ माथि २०८० साउन २१ मा पहिलो संशोधन गरियो । त्यसमा एक दर्जाबाट बढुवा भएको व्यक्तिले लगत्तै कुनै पनि युनिटको इञ्चार्ज सम्हाल्न नपाउने भनिएको छ । मापदण्डको दफा ४ को 'ज' मा भनिएको छ, 'सामान्यतया कार्यालय प्रमुखको रुपमा एक वर्ष सेवा अवधी पूरा गरेपछि मात्र अन्यत्र सरुवा गरिने छ ।' तर, वैशाखमा बढुवा भएका एसएसपीहरूले भदौमा इञ्चार्ज पाएका छन्, त्यो पनि सात-सात महिनामात्रै इञ्चार्ज सम्हालेका एसएसपीलाई हटाएर । यसरी साउन २१ को मापदण्डले भदौ लाग्दालाग्दै हावा खाएको छ । अन्याय पनि साना दर्जालाई मात्र हुन्छ भनिन्थ्यो । तर, दफा ५ को 'ख' माथि मजाक उडाउँदै एआइजी श्याम ज्ञवाली चार महिनामै उपत्यका प्रहरी प्रमुखको जिम्मेवारीबाट हटाइए । सात महिनादेखि काठमाडौं सम्हालेका दानबहादुर कार्की र उपत्यका अपराधका डा.मनोज केसीहरू हेडक्वार्टरतिर पठाइए । १० औं दफाको 'ङ' मा पहिलोपटक कार्यालय प्रमुखको जिम्मेवारी दिइँदा 'ग' वा 'ख' श्रेणीको युनिट दिने भनिएको छ । तर, ३० गतेको सरुवामा उक्त कुरा कार्यान्वयन गरिएन । शुरुमै 'क' श्रेणीको युनिटमा पठाइएको छ । एकपटक 'क' श्रेणीको युनिट चलाएको इन्स्पेक्टरले दोस्रो पटक पनि सोही श्रेणीको युनिट नपाउने भनिएको थियो । तर, सरुवाको सूची हेर्दा मापदण्डप्रति उत्तरदायी देखिँदैन ।

Nepal Airlines
THE BEST WAY TO VISIT NEPAL
FOR SAFE, RELIABLE AND QUALITY SERVICE
New Delhi • Mumbai • Bangalore • Doha • Dubai • Riyadh • Bangkok • Hongkong • Kualalampur • Narita
www.nepalairlines.com.np
International Sales (Kathmandu)
Domestic Sales (Kathmandu)

NIMB
गज्जब ६
मुद्दती खाता
भविष्यका आर्थिक आवश्यकता पूरा गर्न
NIMB को योजना
गज्जब ६
देश विदेश भ्रमण
उपहार खर्च
सेवानिवृत्त जीवन
आर्थिक सुरक्षा
पारिवारिक जिम्मेवारी
सन्तानको उच्च शिक्षा
NIMB
समृद्धिको पथमा सँगै अघि बढ्दै
NEPAL INVESTMENT MEGA BANK LIMITED
www.nimb.com.np | Durbar Marg, Kathmandu | Phone: 01-4242530, 01-4228229 | info@nimb.com.np

विदेशबाट पठाएको रकम
सिधै IME Pay मा प्राप्त गर्नुहोस्
IME Pay मा विदेशबाट पठाएको
पैसा प्राप्त गर्दा पाउनुहोस् रु. ५०।- बोनस ।
IME


### ३६५ दिने बचत योजना

| दैनिक किस्ता | समय अवधि | एकमुष्ठ भुक्तानी |
|---|---|---|
| रु. १०५/- | ३६५ दिन | रु. ४०,०००/- |
| रु. २१०/- | ३६५ दिन | रु. ८०,०००/- |
| रु. ५२५/- | ३६५ दिन | रु. २,००,०००/- |
| रु. १०५०/- | ३६५ दिन | रु. ४,००,०००/- |
| रु. २१००/- | ३६५ दिन | रु. ८,००,०००/- |
| रु. ३१५०/- | ३६५ दिन | रु. १२,००,०००/- |
| रु. ४२५०/- | ३६५ दिन | रु. १६,००,०००/- |
| रु. ५२५०/- | ३६५ दिन | रु. २०,००,०००/- |

* शर्तहरु लागु हुनेछ ।

### नारी लखपति बचत योजना

| समय अवधि | ब्याजदर |
|---|---|
| १ वर्ष | १०% |
| २ वर्ष | ११% |
| ३ वर्ष | १२% |
| ४ वर्ष | १३% |
| ५ वर्ष | १४% |

* शर्तहरु लागु हुनेछ ।

### बाल शैक्षिक बचत

| समय अवधि | ब्याजदर |
|---|---|
| १ वर्ष | १०% |
| २ वर्ष | ११% |
| ३ वर्ष | १२% |

* शर्तहरु लागु हुनेछ ।

नोट ३ वर्ष भन्दा माथिको समयावधिको लागि आपसी समझदारीमा ब्याज निर्धारण गरिनेछ साथै आवश्यक कागजातहरु उपलब्ध गराउनु पर्ने छ । बच्चाको जन्म दिनमा वर्थडे-केक उपलब्ध गराइनेछ ।

### जेष्ठ नागरिक बचत

| समय अवधि | त्रैमासिक ब्याजदर | अर्धवार्षिक ब्याजदर | एकमुष्ठ ब्याजदर |
|---|---|---|---|
| १ वर्ष | ११.७५% | १२.५०% | १३.२५% |
| २ वर्ष | १२.७५% | १३.२५% | १४% |
| ३ वर्ष | १३.७५% | १४.५०% | १५.२५% |

* शर्तहरु लागु हुनेछ ।

तिन वर्ष भन्दा माथि समय अवधिको लागि आपसी समझदारीमा ब्याज निर्धारण गरिनेछ ।

### कर्जा तथा सापट योजना

| कर्जा शिर्षक | | ब्याजदर |
|---|---|---|
| व्यवसायी कर्जा | - | १६.००% |
| धितो कर्जा | - | १६.००% |
| हायर पर्चेज कर्जा | - | १६.००% |
| मुद्दति रसिद धितो कर्जा (FDR) | - | ३.००% |
| सहुलियत कर्जा | - | १३.००% |
| अन्य कर्जा | - | संस्थाको नियम अनुसार |

आधार
बहुउद्देश्यीय सहकारी संस्था लिमिटेड
AADHAR MULTIPURPOSE CO-OPERATIVE LIMITED
का.म.न.पा.-१४, कलंकी, काठमाडौं
०१-५२१९४११, ५२१९२९८

## सत्ताभित्र...

गर्नुभएको छ । अघिल्लो साता समाजवादी मोर्चाको सन्देश सभालाई संबोधन गर्न सुर्खेत पुग्नुभएका प्रधानमन्त्रीले बर्खापछि सडकमा कार्यकर्ता उतारेर आन्दोलन गर्ने चेतावनी दिनुभयो । सरकार ढालेर देखाउन चुनौती दिँदै उहाँले भन्नुभएको थियो- 'राम्रो काम गर्ने हो, त्यसो गर्दा कसले सरकार ढाल्दो रहेछ हेर्छौं ।' देशको कार्यकारी प्रमुखले कसका विरुद्ध आन्दोलन गर्ने ? यो आफैंमा अनौठो र असामान्य लाग्छ । तर, माओवादी नेताहरू भन्छन्, 'राम्रो गर्ने हो, सरकार कति दिन टिक्छ त्यो कुरा प्रमुख हैन भन्ने सन्दर्भमा प्रधानमन्त्रीको उक्त अभिव्यक्ति आएको हो ।'

नक्कली भुटानी शरणार्थी प्रकरण र ललिता निवास जग्गा काण्डको छानबिन अहिलेको सरकारले एकैचोटी थालेको होइन, पहिलेदेखि नै पाइप लाइनमा रहेको मुद्दाको अनुसन्धान अघि बढाएको हो । तर, भ्रष्टाचारका फाइल खुल्दै जाँदा अधिकांशमा कांग्रेस र एमालेका नेताहरूको सम्बन्ध आइरहेको छ । सुन प्रकरणमा माओवादी नेताहरू पनि मुछिएका छन् । माओवादी एक उच्च तहका नेता भन्छन्, 'त्यहाँसम्म पुग्यो भने हामी 'छोड्दैनौं' भन्ने उनीहरूको कुरा छ । त्यसैलाई लिएर सरकार रहने नरहने निश्कर्षमा पुग्ने हो भने कांग्रेस-एमालेलाई प्रत्युत्पादक हुन्छ ।'

यता, बालकोटको बार्दलीमा उभ्याएर आफ्नै समर्थनमा प्रधानमन्त्री बनाइएका प्रचण्डले गिरिबन्धु टि-इस्टेटको विषय उठाएपछि एमाले अध्यक्षले पनि यो सरकारलाई चुनौती ठान्नुभएको छ । यसै पनि 'गभर्मेन्ट इन वेटिङ' भनिने प्रतिपक्षी दलले मौका मिल्दा सरकार ढाल्न प्रयास गर्नुलाई अस्वाभाविक मानिँदैन । कांग्रेस महामन्त्री गगन थापा र नेता शेखर कोइराला हुँदै पछिल्लो समय अमेरिकाको विश्वासपात्र भनिएका मीनेन्द्र रिजालसमेत सरकारको विपक्षमा खुल्न थालेपछि ओलीलाई पनि सजिलो भएको छ । गगन र मीनेन्द्रको मूल चासो भ्रष्टाचारमा बालकृष्ण खाँण तानिएकोप्रति होइन, एमसिसीमा हो । कांग्रेसको यही समूह ओलीतिर नजिकिएको माओवादीको आशंका छ । गगन-मीनेन्द्रहरूको समूहले गठबन्धन तोडेर लार्जेष्ट पार्टीको नेताका हैसियतमा प्रधानमन्त्री बन्न सकिने र त्यसका लागि ओलीलाई मनाउने संकेत दिएपछि देउवा पनि तरंगित भएको भनिँदैछ । तर, पुस १० गते ओलीबाट खाएको धोकाको चोट नमेटिँदै फेरि त्यतै फाल हालेर गैहाल्ने मनस्थितिमा देउवा पुगिनसकेका कारण गठबन्धनले निरन्तरता पाइरहेको विश्लेषण माओवादी नेताहरूले गरेका छन् ।

यता, समाजवादी मोर्चाका नाममा ५४ सिटको बलियो शक्ति बनाउनुभएका प्रधानमन्त्री प्रचण्डले पाँचै वर्ष आफूलाई प्रधानमन्त्री हुने अवसर पनि छ भन्ने गर्नुभएको छ । त्यो भनेको एमालेको सहयोगमा वामपन्थी सरकार बनाउछौं भनेर कांग्रेसमाथि बढाएको दबाब हो । एमालेभित्र पनि वामपन्थीहरू मिल्नुपर्छ भन्ने मत पछिल्लो समय बलियो हुँदै गएको देखिन्छ । पूर्वराष्ट्रपति विद्या भण्डारीको सक्रिय राजनीतिमा फर्किने चर्चालाई वाम एकतासँग जोडेर हेरिएको छ । सुवास नेम्वाङहरूले नेतृत्वविरुद्ध खुलेरै बोल्न थाल्नुले पनि एमालेमा अन्तरविरोध बढेको अनुमानलाई बल पुऱ्याउँछ । अर्कोतिर एमाले र माओवादीका नेताहरूलाई पालैपालो बोलाएर चीनले वाम एकताका लागि कूटनीतिक सल्लाह दिइरहेको छ । माओवादी केन्द्रका उपाध्यक्ष अग्नि सापकोटा र महासचिव देव गुरुङलाई चिनियाँ नेताहरूले बुझिनेगरी त्यो सन्देश दिएको बताइन्छ । पार्टीका केही नेताहरूसँगको अनौपचारिक कुराकानीमा गुरुङले 'ओलीको नेतृत्व गलत होला तर सिंगै एमाले खराब होइन, तपाईंहरू मिल्नुस्' भन्ने चिनियाँ सन्देश सुनाएका छन् । गुरुङ फर्केलगत्तै एमाले महासचिव शंकर पोखरेल नेतृत्वको टोली पनि चीन पुगेको छ । प्रधानमन्त्री प्रचण्डको भ्रमणको ठीक अगाडि विकसित यी घटनाक्रमले सत्ता राजनीतिमा गडबडीको संकेत गरेको माओवादी नेताहरू स्वीकार्छन् ।

## कम्युनिष्टहरूलाई...

*पुरानो पुस्ताप्रति बढ्दो नकारात्मकतालाई चिरेर युवा भावना सम्बोधन गर्न पनि यो मोडल उपयोगी हुन सक्थ्यो ।*

*उक्त प्रस्ताव स्वीकारिएको भए एकातिर नेकपाको एकता कायम हुने थियो भने कालान्तरमा नेतृत्व विकासमा पनि मद्दत पुग्ने थियो । अमेरिकामा ६ वर्ष अगाडिदेखि नै भावी राष्ट्रपति को हुँदैछ भनेर प्रचार गरिन्छ । तर, नेपालमा वडाको उम्मेदवार पनि अन्तिम घडीमा हेरफेर गर्ने प्रचलन छ । यस्तो पद्धति र कार्यशैलीले पार्टीप्रति युवाको आकर्षण घट्दै जाने भएकाले दोस्रो पुस्ताका नेताहरूलाई ठोस जिम्मेवारी तोकेर कार्यविभाजन गर्दा आम रूपमा पनि राम्रो सन्देश जाने थियो ।*

*तर, निरन्तर नेतृत्वमा रहने महत्वाकांक्षा बोकेका ओली, प्रचण्ड र माधवबाट त्यस्तो प्रस्ताव स्वीकार भएन । परिणामतः झण्डै दुई तिहाइको कम्युनिष्ट सरकार मात्र ढलेन, शक्तिशाली नेकपा चार चिरामा विभाजित भयो । भलै पार्टी विभाजन हुनुका पछाडि वैचारिक-राजनीतिक कारण नै मुख्य रहेको नेताहरूले दाबी गर्ने गरेका छन् । जे होस् फुटको प्रभाव स्थानीय तहदेखि संघीय संसदसम्म परेको छ । कम्युनिष्टहरू एक भएका बेला प्रत्यक्षतर्फ २६ सिटमा खुम्चिएको कांग्रेसले उनीहरूको विभाजनको फाइदा उठाउँदै अहिले ५३ सहित ८९ सिट जितेर पहिलो दल बनेको छ ।*

*'..... गरिसकेपछि दैलो देख्ने' भनेजस्तै क्रमशः महसुस गर्न थालेका तीन वटै पार्टीका युवा नेताहरूले समेत पछिल्लो समय एकताको बहस चलाउन थालेको देखिन्छ । त्यसमा उत्तरी छिमेकीको सदाशयताले पनि काम गरिरहेको हुन सक्छ । अर्कोतिर एमसिसीलगायत सत्ता सञ्चालनमा कांग्रेसले लिएका कतिपय अडानले माओवादी केन्द्र र एकीकृत समाजवादीलाई बालकोटतिर धकेलिरहेको छ । त्यसो त, एकअर्काको अस्तित्वसमेत स्वीकार नगर्ने तहमा पुगेका एमाले, माओवादी र समाजवादीका शीर्ष नेताहरू अहिले नै आत्मालोचित भएर एकताको दिशामा मोडिने सम्भावना देखिँदैन । ७० वर्षे उमेर हदसम्बन्धी पार्टी विधानको व्यवस्थालाई नै निलम्बन गरेर एमाले अध्यक्ष ओली फेरि नेतृत्व हात पार्न मसक्क आँटेर लागेको छनक आइसकेको छ । पूर्वराष्ट्रपति विद्या भण्डारीको पक्षमा वकालत गर्ने कर्ण थापाहरूलाई कारबाही गर्न पार्टी बैठकमा ठाडो प्रस्ताव राखेबाट पनि उहाँ नेतृत्व छोड्ने मनशायमा हुनुहुन्न भन्ने प्रष्ट बुझिन्छ । ०४६ सालपछि निरन्तर नेतृत्वमा रहनुभएका प्रचण्ड पनि सरक्क युवालाई पार्टी जिम्मा लगाएर अभिभावकीय भूमिकामा बस्ने सम्भावनामा धेरैलाई विश्वास लाग्दैन । 'अपमान' नसहने माधवले पनि सजिलै मान्नेजस्तो देखिँदैन ।*

*यता, एमालेभित्र एकथरीले विद्यालाई पार्टी नेतृत्वमा फर्काएर उहाँकै नेतृत्वमा कम्युनिष्ट एकताको पहल थालेको चर्चा पनि छ । तर, विद्या आफैँले भने त्यस्तो रहर नगरेको उहाँ निकटहरूले बताएका छन् । केपीको सत्ता बहिर्गमन र एमाले विभाजनपछि गुनासो सुनाउन शीतल निवास पुगेका केही युवाले त्यतिबेलै अभिभावकीय भूमिका निभाइदिन आग्रह गरेकोमा उहाँले 'म अब थकाइ मार्छु, पार्टी राजनीतिमा कुनै इन्ट्रेष्ट छैन' भन्नुभएको थियो । अहिले पनि उहाँको रुचिले नभई निकटहरूको चाहनाले एमालेमा सक्रिय गराउन खोजेको भनिएको छ ।*

*अर्कोतिर, राष्ट्रपति भइसकेको मान्छे एउटा पार्टीको प्रमुख भएर आउन मिल्दैन भनेर रोक्न खोज्नेहरूले नैतिक प्रश्न उठाएपछि उहाँ अप्ठेरोमा पर्नुभएको छ । सेरेमोनियल राष्ट्रपतीय प्रणाली भएका विश्वका कुनै पनि देशमा कार्यकाल सकेर राष्ट्रपति पुनः पार्टीको जिम्मेवारीमा फर्किएको खासै देखिँदैन ।*

## बैठक...

नक्सालाई उसले मान्यता दिन नचाहनुको कारण के होला ? नेपाल सरकारले कूटनीतिक माध्यमबाट यसबारे चिनियाँ धारणा लिनुपर्छ ।

अर्कोतिर मुलुकको आकार यसरी खुम्चिइरहँदा पनि नेपालले सीमा समस्याको हल खोज्न ठोस पहलकदमी किन लिँदैन, लिन सक्दैन ? भन्ने प्रश्न पनि उठिरहेको छ । आफ्नो भूमिको रक्षा गर्नु हरेक सरकारको कर्तव्य हो । सीमा समस्याको गहिराईमा पुगेर छिमेकीहरूसँग आफ्नो प्रष्ट अडानसहित वार्ता र छलफल गर्न सक्नुपर्छ । तर, नेपालका कुनै पनि सरकारले त्यसरी प्रष्ट कुरा गर्न सकेको देखिँदैन । सीमाको रक्षाका लागि शासकहरूलाई दबाब दिने दायित्व आम बुद्धिजीवी, नागरिक समाज र सरोकारवाला अन्य निकायहरूको पनि हो । तथापी उग्र राष्ट्रवादमा रमाउने र मौसमी आन्दोलनमा टिक्ने प्रवृत्ति हावी रहँदा उनीहरूको भूमिका पनि खरो रूपमा प्रकट हुन सकेको छैन ।

अन्तर्राष्ट्रिय मामिलामा राजनीतिक दलका दृष्टिकोण मिलेका बेला मात्र मुलुकको पक्षमा ऐतिहासिक निर्णय भएका उदाहरण पनि छन् । नेपाली भूभाग आफ्नोमा पारेर भारतले एकतर्फी रूपमा नयाँ नक्सा जारी गरेपछि त्यसविरुद्ध सिंगै देश एक ठाउँमा उभिएकै कारण राजा महेन्द्रले समेत नसकेको नयाँ नक्सा निकाल्न सम्भव भयो । भलै कालापानी क्षेत्र अहिले पनि भारतीयको कब्जामा छ, तथापि नक्साले आफ्नो जमिनमाथिको नेपाली दाबीलाई थप सशक्त बनाएको छ । सरकारको नेतृत्व गरिरहेको दल नेकपाको आन्तरिक झगडा उत्कर्षमा पुगेका बेला प्रधानमन्त्री केपी ओली यति ठूलो निर्णय गर्न तयार हुनुका पछाडि सडक र सदनको एकता नै मुख्य कारण थियो । नक्सा प्रकाशन गर्ने विषय सरकारको नीति तथा कार्यक्रममा हाल्न लगाएर ओलीलाई बाध्य पारिएको नेकपाका नेताहरूले बताउने गरेका छन् । सम्भवतः नीति तथा कार्यक्रममा नपरेको भए त्यो नक्सा आउने पनि थिएन ।

भारतले स्थलगत अनुगमन गरेर नभई हचुवामा नेपाली भूभाग आफ्नोमा मिसाएर नक्सा निकालेको हो । त्यसको 'काउण्टर' मा राजनीतिक नेतृत्व केही 'नरम' रहे पनि प्राविधिक तहमा भने भित्रभित्रै नयाँ नक्सा प्रकाशनका लागि तयारीका काम भैरहेको थियो । अहिले चीनले पनि फिल्डमा गएर सीमा छुट्याएर नक्सा निकालेको होइन । स्याटेलाइट इमेज, पुराना नक्सा र अभिलेख जम्मा गरेर 'जिएफ' सफ्टवेयरबाट बनाइएको हो । नापी विभागका अनुसार नेपालले पनि चुच्चे नक्सा त्यसैगरी निकालेको हो ।

प्राविधिक तहमा अध्ययन र तथ्य संकलनको काम चलिरहँदा यता, संसदको अन्तर्राष्ट्रिय सम्बन्ध समिति र राज्यव्यवस्था समितिले नक्सा प्रकाशन गर्न सरकारलाई निर्देशन दिएको थियो । त्यसपछि बल्ल तत्कालीन भूमि व्यवस्थामन्त्री पद्मा अर्याललाई पनि तातो लाग्यो र गोप्य रूपमा काम गर्न नापी विभागलाई निर्देशन प्राप्त भयो । विभाग भने चाहिएका बेला नक्सा निकाल्न सक्नेगरी तयारी अवस्थामै थियो । शुरुमा प्राविधिक समिति गठन गरेर तथ्य संकलनको काम सम्पन्न गरियो । नापी विभागका महानिर्देशकको नेतृत्वमा नेपाली सेनाका मेजर, त्रिभुवन विश्वविद्यालय भूगोल विभागका प्राध्यापक, नापीका सीमा हेर्ने उपमहानिर्देशकहरू सम्मिलित समितिमा विभागको योजना शाखाका प्रमुख सदस्य सचिव थिए । त्यो टोलीले आवश्यक अध्ययन गरेर नक्साबारे फेला परेका प्रमाणसहितको प्रतिवेदन नाप नक्सा समितिलाई बुझायो ।

भूमि व्यवस्था मन्त्रालयको सचिव अध्यक्ष र नापीका महानिर्देशक सदस्य सचिव रहेको त्यो समितिमा विभिन्न मन्त्रालयका सहसचिवहरू सदस्य थिए । प्राविधिक समितिले पेश गरेको तथ्य प्रमाणलाई थप अध्ययन गरी नाप नक्सा समितिले परराष्ट्र मन्त्रालयको सहमतिमा भूमिसुधार मन्त्रालयलाई बुझाएको थियो । त्यसैका आधारमा सरकारले लिम्पियाधुरा, कालापानी र लिपुलेक समेटिएको नेपालको नयाँ राजनीतिक र प्रशासनिक नक्सा सार्वजनिक गरेको हो । २०७७ जेठ ५ गते क्याबिनेटबाट निर्णय भयो भने ७ गते राजपत्रमा सूचना प्रकाशित गरियो । जेठ ३१ गते संविधान संशोधन गरी नक्सा अध्यावधिक भएअनुसार निशान छाप परिवर्तन गर्न संसदमा दर्ता विधेयक दुई तिहाइ बढी मतले पारित हुँदा विपक्षमा शून्य मत परेको थियो ।

नक्सा प्रकाशन गर्नुअघि नेपालले विवाद समाधानका लागि कूटनीतिक पहल पनि गरेको थियो । सरकारले पठाएको कूटनीतिक नोटको जवाफ भारतले नदिएपछि बल्ल नक्सा छाप्ने विषय अघि बढेको हो । अहिले चीनको विषयमा पनि कूटनीतिक वार्तालाई नै पहिलो प्राथमिकतामा राख्नुपर्छ । चीनलाई सहमत गराएरै सगरमाथाको उचाइ घोषणा सम्भव भएको अनुभवले पनि नेपालले वार्ता र कूटनीतिक संवादलाई नै पहिलो विकल्प बनाएर जानु उपयुक्त हुन्छ । सीमाको विषय अध्ययन गर्न संयुक्त प्राविधिक समिति गठन गरेर काम अगाडि बढाउन परराष्ट्र मन्त्रालयले चीन सरकारलाई प्रस्ताव पठाउन अब ढिला गर्नु हुँदैन ।

तर, देशको सीमाजस्तो संवेदनशील सवालमा परराष्ट्र मन्त्रालय कानमा तेल हालेर बसेको छ । राज्यको उपस्थिति बढाउन पनि छिमेकीसँग नियमित 'बोर्डर मिटिङ' हुनुपर्ने हो । तर, झण्डै दुई दशकदेखि नेपाल-चीनबीच कुनै पनि तहका वार्ता, छलफल र औपचारिक बैठक भएको छैन । सन् २००५ मा संयुक्त प्राविधिक समितिले फिल्ड वर्क गरेर त्यसलाई अन्तिम रूप दिन ०११ मा बैठक बसेको थियो । तर, सगरमाथाको उचाइ र दोलखाको यौटा सीमा विवादका कारण उक्त बैठकले निर्णय गर्न सकेन । त्यसयता हालसम्म बैठक बसेको छैन । सीमा समस्या समाधान गर्न गठित नेपाल-भारत प्राविधिक समितिको बैठक पनि सन् २०२० देखि भएको छैन ।

अर्कोतिर राजनीतिक तहमा भएका समझदारी पनि प्राविधिक समिति सक्रिय नहुँदा त्यसै अलपत्र पर्ने गरेको छ । प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डको भारत भ्रमणका क्रममा सीमा विवाद समाधान गर्ने समझदारी भएको भनियो, तर अहिलेसम्म यस्ता संयन्त्रलाई कुनै जानकारी गराइएको छैन ।' संयन्त्रको मिटिङ नै नबसेपछि प्रधानमन्त्री तहमा भएको सहमतिको के अर्थ ? त्यसले काम गर्दैन', परराष्ट्र मन्त्रालयका एक सहसचिव भन्छन्, 'भएका सहमतिलाई संस्थागत गर्न पनि सचिवस्तरीय समिति, प्राविधिक समितिका बैठक नियमित हुनुपर्ने हो, तर भएको छैन ।'

***– साहस न्यौपाने***

## बागदरबारमा...

संलग्नता रहेको बताइन्छ । महानगरपालिकाको सूचना प्रविधि विभाग प्रमुख १० औं तहको हुने व्यवस्था छ । तर, मेयरले छैटौं तहका ढकाललाई सचिवालयमा भित्र्याएका थिए ।

काठमाडौं महानगरपालिकाका सबै विभागमा अहिले प्रमुखले होइन बालेन साहले गैरकानुनी रूपमा राखेका विज्ञहरूले फाइल कब्जा गर्ने र आफूले भनेका फाइल मात्र निर्णय गराउने गरेको कर्मचारीहरू बताउँछन् । एक विभागीय प्रमुखले जनआस्थासँग भने, 'पहिले दलका कार्यकर्ताको रजगज भन्थे, अहिले महानगरपालिकामा बालेनका सहयात्री र सल्लाहकार हावी छन् ।' त्यहाँ सुदिप ढकालको हालीमुहाली कस्तोसम्म छ भने सन्तोष पाण्डेको स्वीकृतिविना कुनै पनि नक्सा पास हुँदैन । मेयरका लागि महानगरले उपलब्ध गराएको सवारी साधन सुनिल लम्सालले प्रयोग गर्दै आएका छन् । बग्रेल्ती सल्लाहकार तथा विज्ञहरूको नियुक्तिउपर २१ औं नगरसभामा अध्यक्षहरूले चर्को विरोध जनाएका थिए । असार पहिलो साता बसेको नगरसभामा एप्स नचलेका विषयमा समेत जनप्रतिनिधिले प्रश्न उठाए ।

लहडी शैलीमा निर्णय ठोक्ने तर कार्यान्वयन नहुने बालेन शैलीको पछिल्लो नमूना असारदेखि नै राजधानी भित्रिने र बाहिरिने सवारीसाधन अनिवार्य नयाँ बसपार्कमा राख्नुपर्ने निर्णय हो जुन पानीको फोका बन्न पुगेको छ ।

## रंगिला...

भूमि व्यवस्था मन्त्रालयमा पुग्दा पनि उस्तै दृश्य देखिएको त्यहाँका कर्मचारीले बताए । कुनै समय ताप्लेजुङको प्रमुख जिल्ला अधिकारी चलाइसकेका निरौलाले यो विषयमा गृह प्रशासन चलाएर अहिले सामान्य प्रशासनमा आएका सचिव विनोद सिंहलाई बताउने पटक पटक प्रयास गरेका थिए तर एकान्त वार्ताको अवसर नजुरेको दुःखेसो सुनाउँछन् । झापामा सहायक सिडिओ रहेका बेला जग्गा किर्ते काण्डमा संलग्न रहेको आरोप उनीमाथि छ ।

## सिआईबीले...

फिरौती बुझाउन गए । उनीहरूले दिएको २१ लाख ७५ हजार रूपैयाँ यतैका दलालहरूले बुझे । अर्थात्, अपहरणकारी टर्कीमा, पैसा बुझ्ने मान्छे नेपालमै । यति गम्भीर खाले अन्तर्देशीय अपराधको जालो फेला परेपछि पीडितको भेषमा पुगेका प्रहरी जसले पैसा लिए, उनैको पछि लाग्यो । फिरौती बुझाएको पाँच घण्टापछि नियन्त्रणमा लिइएका व्यक्तिहरू छुटे । र, लगत्तै अपहरणकारीसँग सम्पर्क भएका व्यक्ति, ज-जसले पैसा लिएका थिए, उनीहरू समातिए । फिरौती बुझाउने क्रममा अपहरणमा परेका व्यक्तिसँग कुरा गराइएको थियो । ग्रिसमा अपहरण गर्ने पाकिस्तानीहरू टर्कीमा हुँदा पक्राउ पर्ने सम्भावना भएन । अपहरणमा परेकाहरूलाई घरमा ग्रिसको एथेन्समै राखिएको भन्न लगाइयो, तर उनीहरू टर्कीमा थिए । यताबाट प्रहरीले संयुक्त राष्ट्रसंघ, अष्ट्रियास्थित नेपाली दूतावास र इन्टरपोललाई समेत पत्राचार गरेको थियो । अपहरणमुक्त हुनेहरू टर्कीस्थित एनआरएन अध्यक्ष उज्वलकुमार घिसिङको सम्पर्कमा गएकोमा उनले जनै पूर्णिमाको दिन १४ गते नेपाल पठाइदिए । यस प्रकरणमा पक्राउ पर्नेमा धनकुटाका ३२ वर्षीय शिवराज कुँवर, काठमाडौंका ५६ वर्षीय रामेश्वर अर्याल, दुबई बस्ने कपिलवस्तुका ३२ वर्षीय प्रकाश बेल्बासे र उनलाई रकम पठाउन नम्बर दिने पर्वत, फलेबासका ४२ वर्षीय दिलबहादुर थापा छन् । यसमध्ये प्रहरीले दुबईबाटै ल्याएका प्रकाश बेलबासे र टर्कीमा रहेका पाकिस्तानी अपहरणकारीबीच सीधा सम्पर्क रहेको पुष्टि भएको छ । नेपालीलाई अपहरण गर्न पाकिस्तानीलाई सूचना दिने र नेपालबाट रकम पठाउने भएपछि कमिशनमा काम गर्ने काठमाडौंस्थित बाँकी व्यक्ति पनि प्रहरी नियन्त्रणमा आएका हुन् । विदेशमा रहेका र पक्राउ पर्न बाँकी व्यक्तिको हकमा प्रहरीले आफ्नो अन्तर्राष्ट्रिय सञ्जाल इन्टरपोललाई पत्राचार गरिसकेको छ ।

त्यस्तै, भन्सार छलेर तस्करी गरिएको सुन काण्डमा हङकङ, भारततिर भागेका मान्छे झिकाउने कानुनी प्रक्रिया पुऱ्याउन प्रहरी विभिन्न परामर्शमा जुटेको छ । त्यसबारे कानुन मन्त्रालयमा छलफल भएको प्रहरीस्रोतले जनायो । अचम्म त के छ भने, उक्त काण्डमा संलग्न चिनियाँ नागरिकहरूले सजिलैसँग नेपाली नागरिकता कसरी लिए ? अहिले गृह मन्त्रालयले त्यसबारे छानवीन समिति गठन गरेको छ । प्रहरी अनुसन्धानबाट खुलेअनुसार, कर्मचारीको हेलचेक्र्याईंले सामान छुट्ने अवस्था आएको हो । किनभने, भन्सारमा रहेका जाँचकी र अन्य कर्मचारी जो-जो थिए, ती कोही नयाँ थिएनन् । उनीहरू १०-१५ वर्षदेखि त्यहीँ काम गर्दै आएका व्यक्ति हुन् । १ बाट २ थान बढी मोबाइल, रक्सी ल्याउनुपऱ्यो भने मुश्किल हुने विमानस्थल भन्सारबाट अर्बौंको लगानीमा सुन ल्याउने मान्छेले केही न केही तयारी नगरी कसरी ल्याउला ? जबकि, एउटा रक्सीको बोतल ल्याउनेले त आउनुअघि नै भनसुन गराउँछ भने त्यत्रो सुन, त्यसका लागि भएको त्यत्रो लगानी जुवाको शैलीमा कसले गर्ला ? यसबारे प्रहरीको सिआइबीले हङकङ पठाएको टोली फर्किएपछि थप नतिजा आउने अनुमान छ ।

## पारससामु...

जवाफ थियो, 'राजसंस्था र हिन्दू राज्यको पक्षमा नेतृत्व गर्नसक्ने तिमी नै हौ, बुबासँग पनि म कुरा गर्छु ।' उनले भने, 'मेरो चिन्ता लिनुपर्दैन, मलाई केही हुँदैन, आजै घर फर्किन्छु ।' राजेन्द्र लिङ्देन नेतृत्वको राप्रपातर्फ इंगित गर्दै उनको भनाइ थियो, 'जसरी चल्नुपर्थ्यो, त्यसरी चलेन ।' महामन्त्री राजाराम बर्तौलासहित कमल थापा त्यहाँ पुगेका थिए ।

अहिले पारसको बसाइ धुम्बाराहीस्थि कुण्डलिनी क्लब (पार्टी प्यालेस) अगाडिको अपार्टमेन्टमा छ । कुण्डलिनी उनका काका तथा पूर्वअधिराजकुमार स्व.धीरेन्द्र शाहका सन्तानहरूको स्वामीत्वमा थियो । पहिला फिटनेश सेन्टर हुँदै स्वास्थ्य संस्थाबाट अहिले बेचबिखन भएपछि पार्टी प्यालेस सञ्चालित छ ।

## उता...

पनि बेला बत्ती नजाने बनाउनको लागि २०-३० वटा सबस्टेशन राख्दा ५०-६० अर्ब खर्च हुन्छ । उक्त रकम सके अनुदानमा, नत्र एक्जिम बैंकको सफ्ट लोनबाट भए पनि दिनुपर्ने माग नेपालको छ । त्यसका लागि पहिला ट्रान्समिशन लाइन बनाऔं, अनि सम्झौता गरौं भन्ने प्रस्ताव गएको छ । त्यस्तै, नेपालमा विद्युतीय सवारीको बढ्दो माग र प्रयोगलाई दृष्टिगत गर्दै काठमाडौंलगायत प्रमुख शहरमा चार्जिङ स्टेशन विस्तारका निम्ति पनि चिनियाँ सहयोगको अपेक्षा राखिएको छ । नेपालको तर्फबाट विभिन्न चार-पाँच शहरी एरियामा स्थानमा त्यस्तो स्टेशनको माग गरिने भएको हो । यसका लागि ४-५ अर्ब अनुदान माग गरिएको छ । यससँगै २२० केभी क्षमताको चिलिमे, रसुवा र केरुङको ट्रान्समिशन लाइन जोड्ने कुरा छ । नेपालको उक्त प्रशारण लाइन तिब्बती भूभागमा पर्ने जेलुङमा जोड्ने सल्लाह हो । त्यसका लागि नेपालको सिमानासम्म १६ किलोमीटर र तिब्बती सीमाबाट ७०-८० किलोमीटरको दूरीमा प्रशारण लाइन स्थापना गनुपर्ने हुन्छ । योसँगै पूर्वी नेपालबाट तिब्बती भूमिमा विद्युत प्रशारणको प्रस्ताव छ । ४ सय किलोवाट क्षमताको उक्त प्रशारण लाइन संखुवासभास्थित किमाथांकाको हाइटारबाट तिब्बतको सिगात्से शहर नजिकै छाओमा पुऱ्याउने सोच बनेको अवस्था छ । त्यसका लागि नेपालतिर ३५ र तिब्बततिर १ सय ३० देखि ४० किलोमीटरको दूरी छिचोल्नुपर्ने हुन्छ ।

तर यसैमा छ तिब्बती सीमावर्ती शहरबाट नेपालमा ल्याइने प्रशारण लाइनबारे प्राविधिक समस्या । न चीनको सिमानामा नेपालको लाइन लैजान सकिने, न उताको विद्युत यता ल्याउन सकिने । फलतः ५-६ वटा जिल्लामा नेपालतिर अन्धकार, उता झिलिमिली अवस्था छ ! नेपालको माग छ, कि सोलार दिनुपऱ्यो, कि त्यतैको लाइन जोड्नुपऱ्यो ! त्यस्तै, किमाथांका-अरुणमा पाँच सय मेगावाटको परियोजना सम्पन्न गर्ने जिम्मेवारी सिनो हाइड्रोलाई दिनुपर्ने चीनको माग छ । उक्त परियोजना नेपाल सरकारले सीधै सरोकार राख्ने नभई उत्पादन कम्पनीअन्तर्गतको हो ।विद्युत परियोजनामा चीनसँगको चासो तय भइरहँदा गत शुक्रबार सिंहदरबारमा अर्को छलफल पनि चल्यो । सबै मन्त्रालयबाट एजेण्डा राख्ने भनेर सचिवहरूको बैठक बोलाइयो । गुनासो एकैखाले थियो- चीनले हरेक कुरामा बिआरआई परियोजना भनिरहेको छ । तर नेपालले आफूलाई बिआरआईअन्तर्गतको भन्न सकिरहेको छैन । उता, चीनले भने ट्याग लगाएको लगायै छ । त्यसले गर्दा कतिपय परियोजना अगाडि बढाउन गाह्रो भइरहेको छ । पोखरा विमानस्थल, विद्युत, केरुङ नाका जोड्ने, विभिन्न परियोजनालाई त्यहीअन्तर्गत भनिदिने गरिएकोले समस्या परेको सचिवहरूको गुनासो छ । उक्त बैठकमा नेपाल वायुसेवा निगमले बाइ वन, गेट वन फ्री प्याकेजअन्तर्गत घरेलु प्रयोजनका लागि खरिद गरेको ३ वटा जहाजको ऋण मिनाहा गरेर अनुदानको रूपमा रूपान्तरण गर्ने कुरा पनि उठ्यो । त्यससँगै सातै प्रदेशमा मेडिकल कलेज खोल्न केहीमा चीन सरकारको सहयोग माग्ने सल्लाहसमेत दिइयो । उक्त छलफलमा भएको सहमतिअनुसार नै व्यवसायिक शिक्षामा सहयोगको प्रस्ताव लगिएको छ । त्यहाँ पढेर आएका डाक्टरले नेपालमा फेरि इन्टर्नसीप गर्नुपर्ने बाध्यता छ । यसमा चिनियाँको भनाइ छ, 'अन्यत्र चार वर्षको पढाई । हाम्रोमा पाँच वर्षको हुन्छ । एक वर्ष यसै पनि बढी पढाई भैसक्यो । त्यसैले इन्टर्न गरिरहन झन्झटिलो भयो ।'

## अर्थतन्त्र...

स्थितिमा देउवापत्नी आरजुसमेतलाई सजिलो हुने व्यक्ति पनि उनै डा.महत भए । पहिला अर्थ मन्त्रालय चलाइसकेका ज्ञानेन्द्रबहादुर कार्की सांसद छन् र उनलाई अर्थमा फर्काउनेबारे पनि गाइँगुइँ चल्यो । तर, कांग्रेसभित्रैको हानाथापका कारण तत्काल त्यस्तो सम्भावना छैन ।

अर्कातिर, विदेशी मुद्राको सञ्चिति ठीक अवस्थामा रहेको राष्ट्रबैंकको दावी छ । तलब खुवाउन भर्खरै १० अर्ब रूपैयाँ आन्तरिक ऋण लिइयो । भन्सार कर लक्ष्यअनुसार उठेन । अहिले दशैं-तिहार मुखमा आएको छ । यो खरिद, बिक्रि बढी हुने समय हो । तर, अहिलेसम्म धेरैले सामान आयात गर्नेमा रुची देखाइरहेका छैनन् । विशेषतः मारवाडी समुदायले प्रतितपत्र (एलसी) खोलेर विदेशबाट सामान आयात गर्न हानाथाप चल्ने यो बेला कारोबार सुनसान छ ।

यसबीच चिनियाँ राजदूत छन सोङले भारतसँग नेपालको व्यापार असन्तुलन भएको भन्दै विद्युत निर्यात र कृषि उपजको ओसारपसारमा नेपालले सचेत हुनुपर्ने बताएका छन् । हुन पनि नेपालले गत वर्ष १६ सय १२ अर्ब विदेशसँग कारोबार गरेको थियो । जबकि निर्याततर्फ दुई सय अर्ब मात्रै छ । र, १४ खर्ब खुद घाटा छ । वैदेशिक व्यापारमध्ये नेपालको ७० प्रतिशत कारोबार भारतसँग हुँदै आएको छ ।

## भागने...

टोलीलाई सेना प्रहरीले विस्तारै फर्काउने तरखर भैरहेको छ । नन्दबक्स र रामबाणसहित विभिन्न पल्टनबाट टोली परिचालित हुँदै आएको छ । यस काममा मानसिक रोग (डिप्रेसन) को औषधी सेवन गर्थे भनिन्छ । उनी भेटिएका छैनन्, तर खोज्न हिँडेको टोलीले एकजना महिलाको शव भेट्टाएको छ । एटिएमबाट पैसा निकालेर गाडी रिजर्भ गरेको हुँदा मर्न हिँडेका हुन् भन्ने कुरा कसैले पत्याउँदैनन् र जीवित नै रहेको अनुमान छ । पत्नीसँग दुई वर्षदेखि अलग्गै बस्दै आएको र ट्र्याक रेकर्ड हेर्दा पहिला पनि ड्युटीबाट भागेको भेटिएको छ । अत्यधिक मदिरा सेवन आदतजस्तै थियो । ४९ बेसिकका अधिकृत हुन् । यही बेसिकका एकजना खरिपाटीको स्विमिङ पुलमा डुबेर मरे । अर्काले पाकिस्तानको तालिममा आत्महत्या गरे । अर्का एकजना नेपालमै झुण्डिए ।

त्यसो त सेनाभित्र पदिक होस् वा सकल दर्जा नै किन नहुन्, भाग्ने, हराउने, लुक्ने घटना पुरानै हो । सशस्त्र द्वन्द्वकालमा गणपति अमिर बस्नेत बुटवलबाट भागेर भारत छिरी जोगी बने । पछि सेनाकै टोलीले समातेर ल्यायो । सशस्त्र द्वन्द्वकालमा गुल्मपति सञ्जोगसमशेर राणाको किस्सा रमाइलो छ ।सल्यानस्थित नरसिंह दलका मेजर थिए । अपरेशनका लागि भैरवनाथ गणका आधा, त्यहाँको आधा टोली भेला भएको थियो । माओवादीको हतियारधारी जत्था अनुमानभन्दा ठूलो संख्यामा आयो, उपियाँजस्तो । भैरवनाथका ३५ केजी बोकेर हिँड्ने चिप्ले किराजस्ता जवानको फूर्तिफार्ती फरक हुने नै भयो । साँझ शरिरको सामान र हतियारमात्रै लिएर रोलकाल चलिरहेको बेला डाँडातिरबाट 'भटटट' आवाज आउन थाल्यो । एकजना सिपाही सञ्जोगकै छेउमा ढले । स्कूलमा बस्ने टोलीसँग हतियारको अवस्था राम्रो हुँदा लडाइँ राम्रो भयो । तर, लड्नमाचाहिँ भैरवनाथ एक्लै पऱ्यो, सञ्जोगको टोली त्यहीँबाट तितरबितर भयो ।

अहिलेका युद्ध कार्य महानिर्देशक ताराध्वज पाण्डे पनि बर्दियामा गणपति हुँदा टोली एकातिर राखेर उछिट्टिएका थिए । पछि आफन्त पवन पाँडे सैनिक सचिव हुँदा रेकर्डबाट त्यो घटना हटाए । मेजर देवकोटा पनि फिल्ड छोडेर भागेकै हुन् । त्यसबेला 'कालिमाटी काल्चे' नामक अप्रेसनका निम्ति बर्दियाको हात्ती दमारमा सेनाको ६ वटा कम्पनी खटिएको थियो । ती कम्पनीलाई अप्रेसनका क्रममा हेलिकोप्टरले ठाउँ ठाउँमा छोडेको थियो । त्यसमध्ये सबुज दलका कर्णेल भट्ट राम्रोसँग लडे । उनलाई सल्यान नजिकै छाडिएको थियो । तर, हात्ती दमारमा छाडिएका ताराध्वजचाहिँ कता पुगे कुन्नि, भेटिएनन् ।

## सन्तान...

पढेर काम गर्नसक्ने हुन्छन् । तर, नेपालमा वर्षमा १५-२० जना नयाँ पाइलटले काम पाउन पनि महाभारत छ । किनभने, भएका हवाई सेवाका लागि चाहिँदो पाइलट पहिल्यै हुन्छन् । निजी क्षेत्रले नयाँ विमान ल्याएमा एउटाका निम्ति चाहिने पाइलट ६ जना हो । यही वर्ष हेर्दा बुद्ध र यतिले एक-एक वटा नयाँ विमान ल्याए । सौर्यले जेटको सट्टा ७२ सीटे एटिआर चलाउने भएको छ । मानौं, त्यसले पाँचैवटा जहाज ल्याएछ भने पनि एउटाका लागि ६ का दरले सात जहाजका लागि ४२ पाइलटले काम पाउलान् । बाँकी सयभन्दा बढी पाइलट त हेरेको हेर्‍यै ! त्यसपछि सन्तानले रोज्छन्, विदेशको बाटो ।

एसइई र प्लस टु गर्नेबित्तिकै विदेश जाने लर्को त्यसै बढेको हैन । वर्षमा १२ कक्षा पास गर्नेको संख्या सरदर सवा दुई लाख हुन्छ । त्यसमध्ये वैदेशिक अध्ययन अनुमति (नो अब्जेक्सन लेटर- एनओसी) लिनेको संख्या यसवर्ष मात्रै एक लाख १० हजार पुगेको छ । त्यसभित्र स्थलमार्गबाट भारत जानका लागि एनओसी चाहिँदैन र संख्याको गणना हुँदैन । यसरी हेर्दा देशमा वर्षेनी सवा दुई लाख विद्यार्थी स्नातक तहका निम्ति योग्य भई उत्पादन हुन्छन्, सवा एक लाख बाहिरिन्छन् । उनीहरूमात्रै जाँदैनन्, विदेशका कलेजलाई पहिल्यै कम्तिमा एक सेमेस्टरको पैसा अग्रिम तिर्दामात्रै वर्षमा ७०-७५ अर्ब रकम बाहिर गएको छ । उक्त रकम बैंकिङ च्यानलबाट जान्छ । बीचमा जाने अन्य खर्चको हिसाब छैन । नेपालमा गुणस्तरीय शिक्षा नभएरमात्रै विद्यार्थीहरू बाहिर गएका हैनन्, भविष्य सुरक्षित गर्नका लागि पनि गएका हुन् । शैक्षिक क्यालेण्डर समयमा लागू नहुने बन्द, हड्ताल बाक्लो, रिजल्ट समयमा नहुने, पढेर पनि रोजगारी नपाइने समस्या त कति कति ! यहाँ रिजल्ट कुरुञ्जेल भारतमा एक सेमेष्टर पढाइ सकिने स्थिति छ । तर कुरा यो मात्रै हैन । शिक्षा नराम्रो हुन्थ्यो भने नेपालमा भारतबाट पढ्न आउनेको संख्या बढ्ने थिएन होला । स्वास्थ्योपचारका लागि पनि प्रशस्त भारतीय आउने गरेकै छन् ।

## चौधरीद्वारा...

उक्त कम्पनी नेपालमा दर्ता भएको थियो । विश्व बैंकको अनुदान सहयोगमा सञ्चालित सो परियोजनामा एसटीएमले बिडिङ कबोल गरेको थियो । विश्व बैंक र सरकारले कम अनुदान माग्ने कम्पनीलाई परियोजना जिम्मा दिने शर्त राखेका थिए । कम्पनीले १ अर्ब रूपैयाँ अनुदानको शर्तमा प्रत्येक गाविसमा दुई वटा भिस्याट पिसिओ राख्न कबोल गऱ्यो । सोही शर्तमा एसटीएममार्फत उक्त जिम्मेवारी जिल्याण्टले पाएको हो । पछि सोही कम्पनी सिजीले किन्यो ।

एसटीएमको नाममा जिल्याण्ट कम्पनी र सिजीले १ अर्ब अनुदान बुझेको देखिन्छ । यतिखेर दुई दशकअघिको भिस्याट प्रविधि फेज आउट भइसकेको छ । २०६९ जेठ १ गते प्रकाशित राजपत्रमा ५३४ वटै गाविसमा टावर राखेर टेष्ट गरेपछि ठीक भएको अवस्थामा मात्रै इजाजत दिने व्यवस्था उल्लेख छ । तर, पहिले कुनै कामै नगरी अहिले लाजै पचाएर सिजीले टावर राखी सेवा सञ्चालन गर्ने बताए पनि फोर जीबारे भने मौन बस्दै आएको छ । टुजीको जमाना सकिएकाले पुरानै टावर राख्ने उसको उद्देश्यमा दूरसञ्चार प्राधिकरण सहमत हुन सक्ने अवस्था कतैबाट देखिँदैन । चौधरीको योजनालाई बल पुग्ने गरी मन्त्रालयले सबै प्रक्रिया फास्ट ट्र्याकबाट अघि बढाउन सम्बन्धित निकाय र इकाइलाई मौखिक जानकारी दिइसकेको बुझिएको छ । छिटो लाइसेन्स फुत्काएर बेच्ने योजना बनाएका चौधरीलाई सजिलो बनाइदिन भ्रष्टाचारविरोधी छवि बनाइसकेकी मन्त्री अघि बढेकोमा दूरसञ्चार क्षेत्रका विज्ञहरूले अचम्म मानेका छन् ।

***– विश्वमणि सुवेदी***

## गाँजाको...

जनकपुर, कोही राजविराज त कोही विराटनगर हुँदै गएका थिए । लाहान, गोलबजारतिर पुगेपछि फेरि समस्या भयो, यातायातकै । साइकल जीवनबाट गुज्रिएर मोटरसाइकल हुँदै गाडीमा बानी परेका नेताहरू यसचोटि सर्रे अम्बास पुग्नका निम्ति कोही चतराको बाटो त कोही आफूले जितेको धनगढीमाई नगरपालिका भएर लहान र गोलबजारबाट जीप र मोटरसाइकल प्रयोग गर्न बाध्य देखिन्थे । किनभने, कार्यक्रमस्थलसम्मै पुग्नलाई मोटरबाटो सहज छैन । उतिबेला बैठक त्यही घरको एक तलामाथि बसेकै शैली यसपटक पनि अपनाउन खोजियो । भुइँतलामा थुप्रै मान्छे जम्मा भएका थिए । उत्तरतर्फ उद्घाटनका निम्ति एउटा मञ्च पनि बनाइएको थियो । बैठकस्थल, अर्थात् माथिल्लो तलामा ०४६ सालतिर पाँच सदस्यीय अध्यक्षमण्डल बसेको ठाउँ यसपटक अध्यक्ष केपी ओली एक्लै हुनुहुन्थ्यो । उहाँ स्वयं पनि ०४६ मा सम्पन्न चौथो महाधिवेशनको आयोजक कमिटी सदस्य मात्रै हो । त्यसबेला अध्यक्ष मण्डलमा रहने पाँच भाइमध्ये यसचोटि कोही भएनन् । त्यसमा तत्कालिन महासचिव झलनाथ खनाल, जीवराज आश्रित, माधवकुमार नेपाल, मदन भण्डारी र सीपी मैनाली हुनुहुन्थ्यो । यसमध्ये जीवराजको देहान्त भइसक्यो भने झलनाथ र माधव एमालेबाट अलग भई एकीकृत समाजवादी पार्टी चलाइरहनुभएको छ । सीपी अलग्गै नेकपा (माले) नामक पार्टी चलाइरहनुभएको छ । उक्त महाधिवेशनबाट निर्वाचित महासचिव मदन पनि अहिले हामीबीच हुनुहुन्न । त्यसबेला तीन सदस्यीय टिपोट कमिटीमा हुनेमध्ये स्वयं केपी ओली अध्यक्ष र ईश्वर पोखरेल उपाध्यक्षका हैसियतले यसपालि उपस्थित हुनुभयो । उक्त कमिटीका अर्का सदस्य प्रदीप नेपाल अस्वस्थ्य हुनुहुन्छ, पार्टी पनि फरक अर्थात् एकीकृत समाजवादी हो ।

०४६ सालमा महाधिवेशनकै लागि भनेर उक्त घर (त्यसबेला नयाँ) । पार्टीकै सहयोग र स्थानीय जनश्रमदानबाट बनेको थियो । यसचोटि शंकर पोखरेलले बैठक शुरु गर्दै प्रस्ताव पेश गर्नुभयो । त्यसपछि प्रदीप ज्ञवालीलाई लेख्न लगाइएको प्रस्ताव पढ्न लगाइयो । प्रस्ताव पढ्न १०-१५ मीनेट लाग्यो । सोही बैठकले मेची-महाकाली अभियान सञ्चालन गर्ने र पहिलाजस्तो पूर्वबाट पश्चिम जाने नभई पश्चिमबाट पूर्वतिर लाग्ने छ । केन्द्रीय कमिटीमा मनोनीत भएका केदार न्यौपानेसहित दुईजनाको कार्यविभाजन उनीहरूलाई नै सोधेर गर्ने भन्ने पनि माइन्युटमा छ ।

उता, काठमाडौंका पूर्वमेयर केशव स्थापितले पार्टी छोडेकोबारे सोही बैठकताका नेताबीच चर्चा चलेको छ । उनले गाँजामाथिको प्रतिबन्ध फुकुवा हुनुपर्ने प्रस्ताव लैजाँदा केपी ओलीले नमानेको कारण चित्त दुखाउने गरेका थिए । तर, त्यही कुरा अहिलेको सरकारले नीति तथा कार्यक्रममा ल्याएको छ तर 'मेरो कुरा अरुले सुन्ने, आफ्नो अध्यक्षले नसुन्ने भएपछि म किन यो पार्टीमा बस्ने ?' भन्दै केही महिनादेखि निहुँ खोज्दै थिए । त्यसपछि उनले निरन्तर 'पार्टीमा काम गर्ने रुची छैन' भन्दै घुर्की लगाइरहेको बेला सचिवालय बैठकले पार्टीबाटै निश्कासन गरिदियो । पछिल्लो स्थानीय निर्वाचनमा काठमाडौंका पूर्वमेयर विद्यासुन्दर शाक्यले खुलेआम आफूमाथि अन्तर्घात गरेको सुनाउँदा पनि मतलब गरिएन भन्ने उनको अर्को गुनासो थियो । मौखिक गुनासोको भरमा 'राजीनामा स्वीकृत' गरिएका उनीसँगै पार्टीबाट निकालिने सिराहाका प्रमोदनारायण यादव माओवादीबाट आएका हुन् । उनले 'बा' प्रति उच्च सम्मान छ तर अब म आफ्नै पार्टी बनाउँछु भनेका थिए । त्यसपछि सचिवालय बैठकबाट उनलाई पनि हटाउने निर्णय भएको छ ।

च्यासलको सोही बैठकमा अध्यक्ष ओलीले नाम नलिई गोकुल बाँस्कोटाहरूप्रति गुनासो गर्नुभयो । 'पार्टीभित्र अराजकता सिर्जना गर्ने, तोकेको ठाउँमा नजाने' ?